# पूर्वीय सनातन धर्म-संस्कृति : समय गणना र सङ्कल्प



सङ्कलन : मोहन प्रसाद सापकोटा

(sapkotamps731@gmail.com)

# पूर्वीय सनातन धर्म-संस्कृति : समय गणना र सङ्कल्प

## समय गणनामा पूर्वीय दर्शन

पूर्वीय दर्शनमा समय गणना गर्ने सनातन वैदिक विधि छ र आजसम्म पनि सोही अनुसार गणना गर्ने गरिन्छ । सूक्ष्मभन्दा सूक्ष्मदेखि स्थूलसम्म समयका गणना हुने गर्दछन् । यही विधिमा ब्रह्माण्डको उत्पत्तिदेखि अन्तसम्मका सबै कुरा समावेश भएका हुन्छन् । समय गणना दुई किसिमले हुने गर्दछ । पहिलो चन्द्रमाको गतिका आधारमा र दोश्रो सूर्यको गतिको आधारमा । यसलाई क्रमशः चान्द्रमान र सूर्यमान भन्ने गरिन्छ । सबभन्दा पहिले समय गणनाका लागि प्रयोग हुने केही शब्दका बारेमा जानकारी दिन चाहैँ ।

## निमेष

दुई लव वराबरको समय अथवा आँखा झिम्क्याउँदा लाग्ने समय अथवा एकपटक आँखा झिमिक्क गरेर खोल्ने समयलाई निमेष (निमि नामका राजालाई बस्न दिइएको स्थान भएकाले यसको नाम निमेष रहेको हो भनी मानिन्छ) भनिन्छ । विष्णुपुराण, छैटौं अंश, अध्याय तीनमा भने “निमेष भन्नाले एकमात्राको अक्षर उच्चारण गर्न लाग्ने समय वा मात्रा भनी चिनिन्छ” भनिएको छ ।

## काष्ठा

(१) विष्णुपुराण, प्रथम अंश, तेश्रो अध्याय : पन्ध्र निमेषको एक काष्ठा हुन्छ ।
(२) अमरकोश : अठार निमेषको एक काष्ठा हुन्छ ।

## कला

तीस काष्ठाको एक कला हुन्छ (१.विष्णुपुराण, दोश्रो अंश, अध्याय आठ । २.नरसिंहपुराण, अध्याय दुई । ३. विष्णुपुराण, छैटौं अंश, अध्याय तीन । ४. कूर्मपुराण, पूर्वविभाग, अध्याय पाँच ।)

## मुहूर्त

तीस कलाको एक मुहूर्त हुन्छ (१.विष्णुपुराण, दोश्रो अंश, अध्याय आठ । २.नरसिंहपुराण, अध्याय दुई । ३. कूर्मपुराण, पूर्वविभाग, अध्याय पाँच ।) । दुई घडीको एक मुहूर्त हुन्छ-नारदसंहिता, अध्याय दुई । दुई नाडीको एक मुहूर्त हुन्छ-विष्णुपुराण, छैटौं अंश, अध्याय तीन ।

## दिनरात

तीस मुहूर्त बराबर मानिसको एक दिनरात हुन्छ (१. विष्णुपुराण, दोश्रो अंश, अध्याय आठ । २. नरसिंहपुराण, अध्याय दुई । ३. विष्णुपुराण, छैटौं अंश, अध्याय तीन । ४. कूर्मपुराण, पूर्वविभाग, अध्याय पाँच ।) ।

## पक्ष

पन्ध्र दिनरातको एक पक्ष हुन्छ (विष्णुपुराण, दोश्रो अंश, अध्याय आठ) ।

## महिना

दुई पक्ष (शुक्ल र कृष्ण) को एक महिना हुन्छ (१. विष्णुपुराण, दोश्रो अंश, अध्याय आठ । २. नरसिंहपुराण, अध्याय दुई । ३. विष्णुपुराण, छैटौं अंश, अध्याय तीन । ४. कूर्मपुराण, पूर्वविभाग, अध्याय पाँच ।) ।

## ऋतु

(१) नारदसंहिता, तृतीयोऽध्यायः- माघबाट शुरु गरी दुई-दुई महिनाको शिशिरादि ऋतु हुन्छन् ।

(२) श्रीवशिष्ठसंहिता, अर्कचाराध्यायः- दुई राशिसम्मको सूर्यको भोगलाई क्रमैले शिशिर आदि गरिएका छ ऋतु भनिन्छ ।

(३) श्रीविष्णुपुराण, द्वितीयेंऽशे अष्टमोऽध्यायः- दुई सौर्य महिनाको एक ऋतु हुन्छ ।

## अयन

छ महिनाको एक अयन हुन्छ ।

(१) श्रीनरसिंहपुराणम्, द्वितीयोऽध्यायः- छ महिनाको एक अयन (दक्षिणायन र उत्तरायन) हुन्छ । देवताको दक्षिणायन रात र उत्तरायण दिन हो ।

(२) श्रीकूर्मपुराण, पूर्वविभागे पञ्चमोऽध्यायः- ती (महिना) छ को एक अयन हुन्छ ।

(३) नारदसंहिता, तृतीयोऽध्यायः- सूर्यले भोग्ने राशि अनुसार मकरदेखि मिथुनसम्म छ राशिको उत्तरायण देवताको दिन र कर्कटदेखि धनुसम्मका छ राशि दक्षिणायण देवताको रात हुन्छ ।

(४) नारदसंहिताः, एकादशोऽध्यायः- मकर संक्रान्तिबाट उत्तरायण र कर्कट संक्रान्तिबाट दक्षिणायण शुरु हुन्छ । तुला र मेष संक्रान्तिका दिन विषुवत् काल (दिनरात) समान हुन्छ ।

(५) श्रीवशिष्ठसंहिता, अर्कचाराध्यायः- सूर्य मकरबाट छ राशिसम्म हुँदा उत्तरायण तथा कर्कट राशिबाट छ राशिसम्म हुँदा दक्षिणायण हुन्छ ।

(६) श्रीविष्णुपुराण, द्वितीयेंऽशे अष्टमोऽध्यायः- सूर्य कर्कट राशिमा उपस्थित हुने समयलाई दक्षिणायन र मकर राशिमा हुँदाको समयलाई उत्तरायण भनिन्छ । तीन ऋतुको एक अयन हुन्छ । माघ-फागुन, चैत्र-वैशाख र जेठ-असार यी छ महिना उत्तरायण हुन्छ । साउन-भदौ, असौज-कार्तिक र मंसिर-पुस यी छ महिना दक्षिणायण हुन्छ ।

## वर्ष

दुई अयन (दक्षिणायन र उत्तरायन) को एक मानवीय वर्ष हुन्छ ।

(१) श्रीविष्णुपुराण, द्वितीयेंऽशे अष्टमोऽध्यायः- दुई अयनको एक वर्ष हुन्छ ।

(२) श्रीनरसिंहपुराणम्, द्वितीयोऽध्यायः- दुई अयन मिलेर मनुष्यको एक वर्ष हुन्छ ।

(३) श्रीकूर्मपुराण, पूर्वविभागे पञ्चमोऽध्यायः - उत्तर र दक्षिण नामका दुई अयनको एक वर्ष हुन्छ ।

(दक्षिणायनमा प्राण त्याग हुनु धार्मिक दृष्टिले त्यति उपयुक्त मानिन्न । त्यसैले महाभारतका भीष्म पितामहले आफूले चाहेको बेलामा प्राणत्याग गर्न सक्ने वरदान पाएका हुँदा उत्तरायण नलागुन्जेल बाणको ओछ्यानमा घोपिएर सुते तर प्राण त्याग गरेनन् ।)

## पितृ र देवताका दिनरात (दिव्यदिन)

(१) श्रीकूर्मपुराण, पूर्वविभागे पञ्चमोऽध्यायः- मानिसको दक्षिणायन देवताको रात र मानिसको उत्तरायण देवताको दिन हुन्छ ।

(२) श्रीविष्णुपुराण, षष्ठेंऽशे प्रथमोऽध्यायः- मानिसको एक महिना र एक वर्ष बराबर क्रमशः पितृ र देवताको एक दिनरात हुन्छ ।

## देवताको वर्ष (दिव्यवर्ष)

(१) श्रीविष्णुपुराण, षष्ठेंऽशे तृतीयोऽध्यायः - तीन सय साठी मानवीय वर्ष बराबर देवताको एक वर्ष हुन्छ । यसलाई "दिव्यवर्ष" भनिन्छ ।

## संवत्सर

वृहस्पति ग्रहको गति हिसाब गरी संवत्सर निकालिन्छ । यी साठी वटा हुन्छन् ।

(१) श्रीवशिष्ठसंहिता, गुरुचाराध्यायः- प्रभव, विभव, शुक्ल, प्रमोद, प्रजापति, अङ्गिरा, श्रीमुख, भाव, युवा, धाता, ईश्वर, बहुधान्य, प्रमाथी, विक्रम, वृष, चित्रभानु, सुभानु, तारण, पार्थिव, व्यय, सर्वजित, सर्वधारी, विरोधी, विकृत, खर, नन्दन, विजय, जय, मन्मथ, दुर्मुख, हेमलम्ब, विलम्ब, विकारी, शार्वरी, प्लव, शुभकृत्, शोभकृत्, क्रोधी, विश्वावसु, पराभव, प्लवङ्ग, कीलक, सौम्य, साधारण, विरोधकृत, परिधावी, प्रमादी, आनन्द, राक्षस, नल, पिङ्गल, कालयुक्त, सिद्धार्थ, रौद्र, दुर्मति, दुन्दुभी, रूधिरोद्गारी, रक्ताक्षी, क्रोधन र क्षय ।

(२) नारदसंहिता, तृतीयोऽध्यायः- प्रभव, विभव, शुक्ल, प्रमोद, प्रजापति, अङ्गिरा, श्रीमुख, भावी, युवा, धाता, ईश्वर, बहुधान्य, प्रमाथी, विक्रम, वृष, चित्रभानु, स्वर्भानु, तारण, पार्थिव, व्यय, सर्वजित्, सर्वधारी, विरोधी, विकृत, खर, नंदन, विजय, जय, मन्मथ, दुर्मुख, हेमलम्ब, विलम्ब, विकारी, शार्वरी, प्लव, शुभकृत्, शोभन, क्रोधी, विश्वावसु, पराभव, प्लवङ्ग, कीलक, सौम्य, साधारण, विरोधिकृत्, परिधावी, प्रमादी, आनन्द, राक्षस, नल, पिङ्गल, कालयुक्ति, सिद्धार्थी, रौद्र, दुर्मति, दुंदुभी, रुधिरोद्गारी, रक्ताक्ष, क्रोधन र क्षय ।

## तिथि

(१) नेपाली बृहद् शब्दकोश :- चान्द्रमानका गणनाअनुसार आउने तथा घटबढ हुने शुक्लपक्ष र कृष्णपक्षका कुनै पनि दिन, परेवादेखि औंसी वा पूर्णिमासम्मका दिन ।

(२) नारदसंहिता, चतुर्थ अध्याय : तिथिको अर्थात् चन्द्रमण्डलको १५ औं भाग क्रमशः परेवा आदि तिथि हुन्छन् ।

## करण

तिथिमानको आधालाई करण भनिन्छ । अर्थात प्रत्येक तिथिमा दुई-दुई करण हुन्छन् । यसका दुई भेद मानिएको छ । पहिलो चर र दोश्रो स्थिर । वव, वालव, कौलव, तैतिल, गर, वणिज र विष्टि यी सात करण प्रत्येक पक्षमा चार-चार पटक पर्ने हुनाले चर भनिन्छन् । शकुनि, नाग, चतुष्पद, किंस्तुघ्न यी चार करण स्थिर करण हुन् किन कि कृष्णपक्षको चतुर्दशीको उत्तरार्द्धमा शकुनि, औंसीको पूर्वार्द्ध र उत्तरार्द्धमा क्रमैले नाग र चतुष्पद, शुक्लपक्षको परेवाको पूर्वार्द्धमा किंस्तुघ्न हुन्छ । अरु तिथिमा यि दोहोरिंदैनन् । यसैले यिनलाई स्थिरकरण भनिएको हो । तिथिबाट करण थाहा पाउनका लागि शुक्लपक्षको परेवाबाट वर्तमान तिथि संख्यासम्म गनेर आएको संख्यालाई दोबर पारी एक घटाउनू । बाँकी भएको अङ्कलाई सातले भाग गरी जती बाँकी हुन्छ त्यति एक...दुई...आदिको क्रममा क्रमशः वव आदि करण हुन्छन् ।

## नक्षत्र

अश्विनी, भरणी आदि नक्षात्र सत्ताइस वटा हुन्छन् । अभिजित् समेत गणना गर्दा यो संख्या अठ्ठाइस हुन्छ ।

## योग

(१) मुहूर्तचिन्तामणिः, शुभाशुभप्रकरणम् :- आनन्द, कालदण्ड, धूम्र, धाता, सौम्य,

ध्वांक्ष, केतु, श्रीवत्स, वज्र, मुद्गर, छत्र, मित्र, मानस, पद्म, लुम्ब, उत्पात, मृत्यु, काण, सिद्धि, शुभ, अमृत, मुशल, गद(रोग), मातङ्ग, रक्ष, चर, सुस्थिर र प्रवर्धमान : यी योगहरु आफ्ना नामानुसार (राम्रा नराम्रा) फल दिने हुन्छन् ।

(२) नारदसंहिता:, दशमोऽध्यायः - आनन्द, कालदण्ड, धूम्र, धाता, सुधाकर, ध्वांक्ष, ध्वज, श्रीवत्स, वज्र, मुद्गर, छत्र, मित्र, मानस, पद्म, लुम्ब, उत्पात, मृत्यु, काण, सिद्धि, शुभ, अमृत?, मुसल, अन्तक, कुञ्जर, राक्षस, चर, स्थिर र वर्धमान : यी अठ्ठाइस वटा आनन्द आदि गरिएका योग हुन् जुन् आफ्नो नाम अनुसारको फल दिने हुन्छन् ।

(३) वशिष्ठसंहिता, योगाध्यायः - विष्कुम्भ, प्रीति, अयुष्मान्, सौभाग्य, शोभन, अतिगण्ड, सुकर्मा, धृति, शूल, गण्डक, वृद्धि, ध्रुव, व्याघात, हर्षण, वज्र, सिद्धि, व्यतीपात, वरीयान, परिघ, शिव, सिद्ध, साध्य, शुभ, शुक्ल, ब्रह्म, ऐन्द्र र वैधृति : यी सत्ताइस योग बताइएको छ । यी सबैले आफ्नु नाम अनुसार फल दिन्छन् ।

## युग र तिनको अवधि

(१) श्रीविष्णुपुराण, चतुर्थेंऽशे चतुर्विंशोऽध्यायः- मानवीय वर्ष गणनानुसार कलियुग तीन लाख साठी हजार वर्षसम्म रहनेछ । कलियुग सकिएपछि फेरी बाह्र सय दिव्य वर्षसम्म सत्ययुग हुनेछ । जुन बेला चन्द्रमा, सूर्य र बृहस्पति पुष्य नक्षत्रमा रहेर एउटै राशिमा एकैपटक आउनेछन् त्यही बेला सत्ययुग शुरु हुनेछ ।

(२) श्रीविष्णुपुराण, षष्ठेंऽशे प्रथमोऽध्यायः- सत्य, त्रेता, द्वापर र कलि : यी चार युग हुन् र यी सबैको समय मिलाएर बाह्र हजार दिव्य वर्ष हुन्छ ।

(३) श्रीकूर्मपुराण, पूर्वविभागे पञ्चमोऽध्यायः- दिव्य बाह्र हजार वर्षको सत्य, त्रेता आदि नामको एक चतुर्युग हुन्छ । चार हजार वर्षको सत्य युग हुन्छ । सत्ययुगको त्यति नै सय (चार-चार सय) दिव्य वर्षको संध्या र सन्ध्यांश हुन्छ । सत्ययुगको संध्याशलाई छोडी क्रमैले तीन, दुई र एक सय गरी जम्मा छ सय दिव्य वर्षको क्रमशः त्रेता, द्वापर र कलिको सन्ध्या र सन्ध्यांश हुन्छ । कालको विषयमा जान्नका लागि सन्ध्यांशहरु बाहेक त्रेता, द्वापर र कलि क्रमशः तीन, दुई र एक हजार दिव्य वर्षको हुन्छ ।

(४) विष्णुस्मृतिः, अध्याय बीस :- बाह्र सय दिव्य वर्षको कलियुग हुन्छ । कलियुगको चौबर वर्ष (चार हजार आठ सय दिव्य वर्ष) को सत्ययुग हुन्छ । कलियुगको दोब्बर वर्षको द्वापर युग हुन्छ । कलियुगको तेब्बर वर्षको त्रेता युग हुन्छ ।

(५) श्रीमार्कण्डेयपुराणम्, षट्चत्वारिंशोऽध्यायः- चार हजार वर्षको सत्ययुग हुन्छ । यसका चार सय वर्षको सन्ध्या र त्यति नै सय वर्षको सन्ध्यांश हुन्छ ।

(६) श्रीवायुपुराणम्, द्वात्रिंशोऽध्यायः- चार हजार वर्षको सत्ययुग हुन्छ, जसमा त्यति नै सयको सन्ध्या र त्यती नै सयको सन्ध्यांश हुन्छ । (यस पुराणको) प्रक्रियापाद खण्ड (अध्याय एकदेखि छ) मा सत्ययुग चार हजार वर्षको हुन्छ भनिएकोले चार चार सय वर्षको सन्ध्या र सन्ध्यांश हुन्छ भनी जान्नू ।

(७) श्रीवायुपुराणम्, अष्टमोऽध्यायः- सत्ययुग चार हजार दिव्यवर्षको थियो । यसमा सन्ध्या र सन्ध्यांश गरी चार चार सय (दिव्य) वर्ष (थप) हुन्थे । सत्ययुग चार हजार दिव्य वर्षको हुन्छ । त्यो युगको संध्या र सन्ध्यांश आठ सय दिव्यवर्षको हुन्छ ।

(८) श्रीब्रह्माण्डमहापुराणम्, पूर्वविभागः, द्वितीयेऽनुषङ्गपादः- चार हजार दिव्य वर्षको पहिलो युग अर्थात् सत्ययुग हुन्छ । यसका सन्ध्यांश चार चार सय दिव्य वर्षको हुन्छ । यो समय (गणना) मा कुनै तलमाथि हुँदैन । यसपछि सत्ययुगको सन्ध्यांश पनि बितेपछि युगधर्मको एक पाउ नास हुन्छ ।

(९) श्रीशिवमहापुराण, वायवीयसंहिता, अष्टमोऽध्यायः- युगको संख्या वा वर्ष दैवीवर्षमा गणना गर्नुपर्दछ (वा गरिएको छ) । चार हजार वर्षको सत्ययुग हुन्छ । त्यसका त्यती नै सय संख्याका सन्ध्या र सन्ध्यांश हुन्छन् ।

(१०) श्रीलिङ्गपुराण, पूर्वभागः, एकोनचत्वारिंशोऽध्यायः- सत्ययुग चार हजार वर्षको हुन्छ । त्यसका त्यती त्यती नै सय वर्षका सन्ध्या र सन्ध्यांश हुन्छन् । (सत्यबाहेक अरु युगका) सन्ध्याकाल क्रमशः तीन, दुई र एक हजार वर्षका हुन्छन् । सबै कल्पमा युगका सन्ध्यांश काल यत्ति नै हुन्छ ।

| युगका नाम | अवधि (दिव्यवर्षमा) | अवधि (मानवीय वर्षमा) |
|---|---|---|
| सत्य | ४,८०० | १७,२८,००० |
| त्रेता | ३,६०० | १२,९६,००० |
| द्वापर | २,४०० | ८,६४,००० |
| कलि | १,२०० | ४,३२,००० |
| जम्मा (एक चतुर्युग ) | १२,००० | ४३,२०,००० |

## युगका लक्षण

(१) **सत्ययुग :**

(अ) श्रीबृहन्नारदीयपुराणम्, पूर्वभागः, एकचत्वारिंशोऽध्यायः- त्यसबेला किनबेच हुँदैनथ्यो । सत्ययुगमा सबै हृष्टपुष्ट थिए । ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र सबै आआफ्ना आचारविचारमा रहेर नारायणको तप र ध्यानमा लागिरहन्थे । सत्ययुगमा देवता, दानव, गन्धर्व, यक्ष, राक्षस र सर्पमा भिन्नता थिएन । सबै देवतासमान स्वभावका थिए । सबै धार्मिक थिए । तिनमा काम, क्रोध आदि दोष थिएन । सबै शम, दम आदि गुणमा लागिरहन्थे । सबैको मन धर्मसाधनामा लागि रहन्थ्यो । कसैमा ईर्ष्या र परदोष देख्ने स्वभाव थिएन । घमण्डी र पाखण्डी कोही थिएनन् । सबै सत्यवादी, चतुराश्रम धर्ममा लागि परेका, वेद पढेका र सबै शास्त्र जान्ने थिए । चारै आश्रममा रहेका मानिस कामना र फल प्राप्तिको चाहना नगरी वा त्यागी समय आएपछि मोक्ष हुने गर्दथे । सत्ययुगमा भगवान् नारायण सेतो वर्णका र निर्मल हुनुहुन्थ्यो । सत्यनामक युगमा वेद पनि विभाजित भएको थिएन ।

(आ) श्रीब्रह्मवैवर्तमहापुराणम्, उत्तरार्धः, नवतितमोऽध्यायः- ती (राजा) प्रजाबाट सोह्र भागको एक भाग मात्र कर लिन्थे । ब्राह्मणहरूसँग कर लिइन्नथ्यो, ती पूजनीय र स्वच्छन्दगामी हुन्थे । सत्ययुगमा कोही दुःखी थिएनन्, सबैका रत्नले बनेका महल थिए । ती भवन सधैं मणि, माणिक्य आदि रत्न र सुनले भरिपूर्ण हुन्थे । पुरुष वा स्त्री कोही पनि आभूषण नलगाउने हुँदैनथे । गुफाहरू तपस्वीले भरिएका हुन्थे । त्यसबेला डाँका र चोरको डर थिएन । सबैको मन पवित्र थियो, तीनै लोक दुष्टविहीन थियो, सबैतिर सुयश भरिपूर्ण थियो, सबै यशस्वी र मङ्गलले सम्पन्न थिए । कोही पनि आफ्नो प्रशंसा आफैं गर्दैनथे, सबै अर्काको गुण सुन्न उत्सुक हुन्थे । मानिसका कोही शत्रु हुँदैनथे, सबै सबैका हितैषी हुन्थे । त्यसबेला न कोही भिक्षुक थिए न त रोगी नै । सबै शोकरहीत र हर्षमग्न थिए । न ती पापी थिए, न धूर्त, न भोकप्यासले पीडित थिए न त निन्दित नै । सबै मानिस बलिया, दीर्घायुका (वा अग्ला) र सुन्दर हुने गर्दथे । कुनै पुण्यशाली मानिसको आयु त लाखौं वर्षको समेत हुन्थ्यो । मानिसमा बुढ्यौली आउँदैनथ्यो सधैं जवान देखिन्थे । सबै जीव मानसिक र शारीरिकरूपमा निरोगी र विकाररहीत थिए । ब्राह्मण, क्षेत्री, वैश्य र शूद्र चारै वर्ण वैष्णव थिए । शूद्र सत्यनिष्ठ र ब्राह्मणका सेवक थिए । चारै वर्णका मानिस तीर्थयात्रा गरेर तथा ब्राह्मणहरू तपस्या गरी आफूलाई पवित्र पार्ने गर्दथे । तीनै वर्णले ब्राह्मणको सेवा गर्दथे र हरदम तिनलाई

भोजन गराउँदथे किन कि ब्राह्मणको मुखलाई बाँझो एवं काँढा रहीत क्षेत्र मानिन्थ्यो । सत्ययुगमा धर्म, सत्य र दया आफ्ना सबै अङ्गले भरिपूर्ण थिए । मानिस धार्मिक थिए । सबै ब्राह्मणहरू वेदज्ञ, पुण्यवान् र तपस्वी थिए । ती नारायणमा मन तल्लीन गरी उनैको ध्यान र जप गर्दथे । शिष्यहरू गुरुभक्त, पुत्रहरू पितृभक्त र पत्नीहरू पतिभक्त एवं पतिव्रता धर्ममा निमग्न हुन्थे । ब्राह्मणहरूभैँ बाँकी तीन वर्ण र स्त्रीहरू पनि विष्णुभक्त थिए । हरदम घरघरमा पितृको, तोकिएका तिथिमा देवताको र सबै समयमा अतिथिको पूजा हुन्थ्यो । सबै मानिस उत्सवादिमा खुशी भएर नारायणको संकीर्तन गर्दथे । त्यसबेला कोही पनि देवता, ब्राह्मण र विद्वानलाई निन्दा गर्दैनथे । गाईहरूले टन्न दूध दिन्थे । पृथ्वी सधैं अन्नले भरिपूर्ण हुन्थ्यो र रत्नका खानीले भरिएको थियो । रुखहरुमा लटरम्म फल लाग्दथ्यो । खोला र नदीहरु सधैं पानीले भरिएका हुन्थे । राजाहरू धार्मिक र प्रजापालनमा तत्पर रहने थिए । चारै वेद, वेदाङ्ग र विविध किसिमका इतिहास तथा संहिताहरू अति प्रकाशमान थिए । पाँचै रमणीय पञ्चरात्र (प्राचीन एक ग्रन्थ विशेष) तथा पुराणहरू एवं अन्य धर्मशास्त्रहरू चाखलाग्दा र मङ्गलकारी थिए । पुरुष वा स्त्री कोही पनि मूर्ख थिएनन्, सबै पण्डित थिए । सबै मानिस ऋतुकालमा आफ्नी पत्नीसँग सहवास गर्दथे । ती न स्त्री-लोभी थिए न त स्त्रीलम्पट नै । त्यसबेला जारीको डर थिएन ।

(इ) श्रीवायुपुराणम्, अष्टमोऽध्यायः - व्यापार र व्यवहार स्वाभाविक हुन्थे बुद्धिको प्रयोग हुँदैनथ्यो । पहिलो सत्ययुगको शुरुमा मानिसहरू नदी, ताल, समुद्र र पहाडका नजिकै बस्ने गर्दथे । तिनलाई धेरै चिसो र गर्मीका कारण पीडा हुने गर्दैनथ्यो । ती इच्छा अनुसार यताउता घुमिरहने गर्दथे । ती पवर्त र समुद्रका किनारमा बस्दथे । तिनको कुनै स्थायी घर पनि थिएन । त्यो सत्ययुगमा रूप र सुखको अनुभव सबैले समानरूपमा गर्दथे । हजारौं संख्यामा प्रजा भएपनि तिनीहरुका बीचमा कुनै किसिमको संघर्ष, प्रतिद्वन्द्विता र जेठोकान्छो आदि क्रमको प्रश्न थिएन । ती एकान्तप्रिय, सुखी, शोक रहित र सत्वगुणी थिए । ती आफ्नो इच्छा अनुसार यताउता घुम्दथे र सधैं प्रसन्न रहन्थे । तिनको रुप, आयु, ताप र चेष्टामा विशेष भिन्नता थिएन । ती इच्छा विपरित व्यवहारमा संलग्न हुने गर्दथे । रुप र आयु सबैको समान थियो । उत्तम र अधम भन्ने प्रश्न नै थिएन । त्यो युगमा सबै सुखी, शोकरहित, सदा प्रसन्न, सत्वगुणी र अति बलिया थिए । सत्ययुगका मानिसमा लाभ-अलाभ, मित्र-शत्रू, प्रिय-अप्रिय सम्बन्धी व्यवहार थिएन । निरीह थिए । मनमा प्राकृतिक

गुणका कारण नै विषयमा संलग्न हुने गर्दथे । एकअर्काप्रति कसैको कुनै इच्छा र स्वार्थ थिएन । परस्परमा अनुग्रहको आवश्यकता पनि पर्दैनथ्यो । त्यो युगका मानिसमा मृत्यु, पीडा र विपत्तिको आशंका थिएन । त्यो (यस कल्पको पहिलो) सत्ययुगमा तिनको आयु बराबर हुन्थ्यो । शरीरको संस्कार नगरे पनि तिनको यौवन स्थिर हुने गर्दथ्यो । ती जन्म र रुपमा समान थिए, मरण पनि एकैसाथ हुने गर्दथ्यो । त्यतिखेर वर्णाश्रमको व्यवस्था थिएन । न वर्णसंकरताको दोष नै थियो । तिनमा धर्म र अधर्मको विचार र कुनै भेदभाव थिएन । कल्पको शुरुको सत्ययुगमा धर्म र अधर्मको विचार नै थिएन । त्यसबेला मानिस आआफ्ना कर्म अनुसार उत्पन्न हुने गर्दथे । त्यसबेला सत्य, अलोभ, क्षमा, तुष्टि, सुख र संयमताकै प्रचार हुने गर्दथ्यो । सत्ययुगमा शुभ र अशुभ कर्ममा मानिस लाग्दैनथे । सत्ययुगमा ध्यानको नै महत्व छ । ती (पहिलो सत्ययुगका मानिस) पृथ्वीको रसबाट उत्पन्न हुने कुरा खाने गर्दथे । त्यो बेलामा पशु, पंक्षी, सरिसृप आदिजस्ता जीव थिएनन् । न त्यतिखेर अधर्म गर्ने खालका कुनै नारकीय जीव थिए न कुनै उद्भिज पदार्थ नै । कन्दमूल, फल र फूलको त्यतिखेर अभाव थियो (अर्थात् यिनको खेती हुँदैनथ्यो) । ऋतु र ऋतुजन्य परिवर्तन आदि पनि हुँदैनथे । तिनका लागि हरपल सुखदायी हुन्थे । अती चिसो र प्रचण्ड गर्मी त्यति बेला हुँदैनथ्यो । तिनलाई जहाँ जतिखेर पनि खोजेको पदार्थ प्राप्त हुन्थ्यो । इच्छा गर्नासाथ पृथ्वीबाट रसिला पदार्थ प्राप्त हुन्थे । तिनलाई बल र रूपवर्द्धक रोगनाशक औषधीहरु पनि उपलब्ध थिए । मनले ध्यान गर्नासाथ एक पटक ती प्रजा प्रत्येकलाई पञ्चलक्षण (पुराणका पाँच लक्षण ?) शुद्ध शब्द आदिको ज्ञान प्राप्त भयो । तीनले मानसी सिद्धि पाएकाले कतै केही रोकतोक हुँदैनथ्यो । त्यसपछि त्यो सत्ययुगको सन्ध्यांश पनि बितिसकेपछि त्यसबेलाको युगधर्म पनि चारभागको एक भाग मात्र बाँकी रहन्छ । यसरी सत्य युग बित्दा त्यो युगको मानसि नामक सिद्धि पनि लोप भयो । कल्पको शुरुको सत्ययुगमा मानिसमा मानसी सिद्धि हुन्छ । त्यो मानसी नामको सिद्धि लोप भएपछि त्रेता र सत्य युगको सन्धिकालमा अर्को सिद्धिको जन्म भयो । मैले सृष्टिको वर्णन गर्दा जुन् आठ प्रकारका सिद्धि गन्न लगाएका थिएँ, ती आठै सिद्धि क्रमशः नष्ट हुन्छन् । सबै मन्वन्तरमा चारैयुगको विभाजन अनुसार वर्णाश्रम धर्म आचार पालना बमोजिम कर्मका सिद्धिहरु हुन्छन् । तर, युगको अन्तसँगै वर्णाश्रमका आधार र कर्मजन्य तिनका सबै खाले सिद्धिहरु पनि नष्ट हुन्छन् । सत्ययुगको सन्ध्याकालमा युगधर्मको एक चरण, सन्ध्यांशकालमा

अर्को चरण, त्रेताका शुरुमा अर्को एक चरण नष्ट हुन्छ । यही क्रमले तपस्या, शास्त्रज्ञान, बल र आयु पनि खिइने गर्दछ । हे मुनिजन ! सत्ययुग र सन्ध्यांश क्षीण भएपछि त्रेतायुग शुरु हुन्छ । जब प्रजामा युगादि कालीन सिद्धि नष्ट भइसकेको हुन्छ तब फेरी तिनमा अर्को सिद्धि उत्पन्न हुन्छ । (मानसी सिद्धिः-मनले कल्पना गरेको कुरा हुने वा पाइने विशेष ज्ञान ।) । (ब्रह्माले कल्पना गरी सृष्टि गरेका) ती सबै जोडी एकअर्कासँग प्रेममा आकृष्ट भई मैथुन कर्ममा लागे । यो कल्प (अहिले चलिरहेको वराह कल्प) मा पनि त्यही बेला (पहिलो सत्ययुग) देखि मैथुन मार्फत सृष्टि हुन थालेको हो । त्यसबेलाका स्त्रीहरु हरेक महिना रजस्वला हुँदैनथे । अतः मैथुन गर्दा पनि सन्तान जन्माउन कठिन हुन्थ्यो वा सन्तान हुँदैहुँदैनथे । ती स्त्री जीवनको उत्तरार्द्धमा एउटा मात्र सन्तान जन्माउने गर्दथे ।  ती क्षुद्र र मरणशील थिए । त्यही बेलादेखि नै यो कल्पमा मैथुनसृष्टिको शुरुवात भयो । ब्रह्माबाट पहिले जुन मानसी सृष्टि भएको थियो त्यही वंशमा (पछि) मैथुनसृष्टि पनि भयो, जसले गर्दा यो जगत् भरिभराउ हुन पुग्यो । ती शुद्ध मनले सङ्कल्प गर्दथे र त्यसै अनुरुप मैथुनबाट सन्तान उत्पन्न हुने गर्दथे ।

(ई) श्रीकूर्मपुराणम्, पूर्वविभागः, सप्तविंशोऽध्यायः - मानिस तपस्यामा लिन भई पर्वत र समुद्रका किनारमा बस्दथे, घर थिएन । मानिसहरु सधैं सात्विक आनन्दले तृप्त र यसैका भोगी हुन्थे ।  त्यसबेला अधम र उत्तम नै थिएन । सबै भेदभाव रहीत थिए । त्यो सत्ययुगमा ती सबैको सुख र रूप बराबर हुन्थ्यो । मानिसहरुमा शोक हुँदैनथ्यो, सत्वप्रधान थिए, एकान्तप्रिय थिए । निष्काम कर्म गर्दथे र सधैं प्रसन्न रहन्थे । लोभरहीत ढङ्गले आजीविका चल्दथ्यो । त्यो (पहिलो) सत्ययुगमा सबैको आयु बराबर हुन्थ्यो । सत्ययुगमा ध्यान नै श्रेष्ठ साधन थियो । सत्ययुगमा ब्रह्मा प्रमुख देवता हुन्छन् । पहिलो सत्ययुगमा सनातन धर्म चार चरण (दया, सत्य, पवित्रता र तप) को हुन्थ्यो । मानिस ध्यानमा लागिरहन्थे, तपस्या गरिरहन्थे र महादेवका भक्त थिए । सत्ययुगमा मैथुनको उत्पत्ति भयो ।

(उ) श्रीब्रह्माण्डमहापुराणम्, पूर्वविभागः, द्वितीयेऽनुषङ्गपादः - सत्ययुगमा मानिस पर्वत र समुद्रका किनारमा बस्दथे स्थाई घर बनाएर बस्ने गर्दैनथे । त्यो सत्ययुगमा सबै ( मानिस) को आयु, सुख र रुप समान थियो ।  त्यतिखेर हजारौं मानिस यताउता फिँजिएका थिए । तिनीहरूमा (घात)प्रतिघात, झगडा र रोलक्रम हुँदैन थियो । मानिस शोकरहीत, सत्वप्रधान, एकान्तप्रिय र सुखी थिए । प्रसन्न चित्तले कुनै चाह

नराखी यताउता घुमिरहन्थे । मानिस जे चाहन्थे त्यो सधैँ सबैतिर पाउने गर्दथे । ध्यान गरेपछि पृथ्वी छेडेर चाहेका कुरा बाहिर आउने गर्दथे । त्यतिखेरका मानिस बलिया, राम्रा, बुढ्यौलीले नछोएका र निरोगी हुन्थे । सबैको जन्म र रूप समान थियो, प्रसन्नतामा पनि समानता थियो । त्यसबेला सत्यप्रधान थियो, मानिसमा लोभ थिएन, सबै सन्तुष्ट, सुखी र मनलाई नियन्त्रण लिन सक्ने थिए । रूप, आयु, पेसा र चेष्टामा सबैमा समानता थियो । विशेष प्रयाश नगरी कनै स्वतः पेसा चलिरहेका हुन्थे । सत्ययुगमा सबैको उस्तै रूप र समान आयु थियो । यो अधम र उ उत्तम भन्ने थिएन । प्रायः सबै सुखी थिए, शोक हुँदैनथ्यो । त्यसबेला लाभ-हानी, मित्र-अमित्र र प्रिय-अप्रिय भन्ने थिएन । तिनले मनले चिताएको पुग्ने हुनाले उपभोगको चाहना गौण हुने गर्दथ्यो । वर्ण र आश्रमको व्यवस्था थिएन न त्यो व्यवस्था गराउने नै थिए । विशेष चाहना र द्वेष नराखी परस्परको व्यवहार गर्दथे । कल्पको पहिलो (सत्य) युगमा धर्म र अधर्म थिएन । धर्म वा पापमा मानिस लागि पर्दैनथे । त्यो युगमा ज्ञान प्रधान हुन्थ्यो र त्यसैमा मानिस लागिरहेका हुन्थे । सत्ययुगमा सत्व गुणको वृत्ति हुन्छ । त्यसबेला जनावर, चरा र घस्रेर हिँड्ने प्राणी थिएनन् । न जमिन छेडेर उम्रने रुखविरुवा नै थिए न त मदहोश र पागल मानिसहरू नै थिए । धर्मको यही अवस्था थियो । जीवन गुजाराका लागि जरा, फल र फूलको प्रयोग गरिन्थ्यो । अत्यन्त एकान्त र शान्त समय थियो । न गर्मी थियो न त जाडो नै । शरीरको संस्कार नगरिए पनि मानिसको जवानी स्थिर रहने गर्दथ्यो । शारीरिक सम्पर्क नगरेपनि मानसिक सङ्कल्पबाट सन्तानहरू जन्मने गर्दथे ।

(ऊ) श्रीमार्कण्डेयपुराणम्, पूर्वविभागः, एकोनपञ्चाशत्तमोऽध्यायः - त्यो युगमा मानिस नदी, तलाउ र समुद्रका किनारमा वा पर्वतमा बस्दथे । त्यसबेला जाडोगर्मी कम हुने गर्दथ्यो र सोही अनुसार विचरण गर्ने गर्दथे । ती सबै घर बिना नै पर्वत र समुद्रका छेउमा बस्ने गर्दथे । कुनै इच्छा नगरी प्रसन्न मनले यत्रतत्र घुमिरहन्थे । स्वतः पाइने कुरामा मानिस सन्तुष्ट हुने गर्दथे । तिनीहरूका बीचमा वैमनस्यता, द्वेष र मात्सर्यता थिएन । इच्छा र द्वेष नभएका ती मानिस आपसमा मिलेर बस्दथे । ती सबैको रूप र आयु समान हुन्थ्यो, कोही अधम र उत्तम भन्ने थिएन । संस्कार हुँदैनथ्यो । सबैको जवानी स्थिर हुन्थ्यो । चार हजार मानवीय वर्ष तिनीहरूको आयु हुन्थ्यो र बाँचुञ्जेल कुनै पीर र दुःख हुँदैनथ्यो । त्यसबेला जतिखेर पनि सुखै सुख थियो । धर्म र शीलस्वभाव भन्ने जस्ता कुरा केही पनि थिएनन् । समय गुज्रेपछि अचानक तिनलाई

सिद्धि (ज्ञान) प्राप्त हुन्थ्यो । ती बिहान र दिउस भोकै हुन्थे । तर, जब ती मनले चाहन्थे तब ती अनायाश (सिद्धि मार्फत्) तृप्त हुने गर्दथे । जे कुरा चाहन्थे त्यो पूरा हुन्थ्यो । पानी तथा अन्य अनेक थरी रसादि सूक्ष्म कुराहरू पनि उल्लासपूर्वक (सिद्धि मार्फत) पाइने गर्दथ्यो । तिनलाई मनले चिताएको पुग्ने सिद्धि प्राप्त हुन्थ्यो । तिनको पृथ्वीसँग सम्बन्ध भएका कारण बेलाबेलामा सिद्धि प्राप्त हुन्थ्यो र समय बितेपछि ती आफू नाश भएजस्तै तिनले पाएको त्यो सिद्धि पनि (युगको अन्तमा) नष्ट हुने गर्दथ्यो । त्यसबेलाका स्त्रीहरू महिनामहिनामा रजस्वला हुँदैनथे । यसकारण मैथुनमा संलग्न हुँदा पनि सन्तान हुँदैनथे । उमेर सकिन लाग्दा (बल्ल) स्त्रीपुरुष सन्तान पाउँदथे, त्यसैबेलादेखि यो कल्पमा मैथुन-सृष्टि शुरु भएको हो । ध्यान र मनको चाहनाले गर्दा एक पटक सन्तान जन्मन्थे । जन्मेका मानिसमा शब्द आदि विषयका पाँचै लक्षण शुद्ध हुने गर्दथे । यही नै पहिले ब्रह्माले गरेको मानसी सृष्टि हो । त्यसैको विकसितरूपले यो संसार भरिपूर्ण छ । नचाहँदा नचाहँदै (सङ्कल्प नगरी) पनि सन्तान हुन्थे । ती सन्तान जसरी एकैपटक जन्मन्थे त्यसैगरी एकैपटक मर्दथे ।

(ऋ) श्रीलिङ्गपुराण, पूर्वभागः, एकोनचत्वारिंशोऽध्यायः- ती बस्ने घर हुँदैन, पर्वत र समुद्रतीरमा बस्ने गर्दछन् । सत्ययुगका मानिस सबै सधैं सन्तुष्ट रहने र आनन्द भोग्ने गर्दछन् । तिनमा अधमता र उत्तमता हुँदैन । तिनमा विशेष गुणधर्म हुँदैन र सधैं सुखी हुन्छन् । सत्ययुगमा सबै मानिसको आयु, सुख र रूप समान हुन्छ । तिनका बीचमा माया, झगडा, इर्ष्या र क्लेश हुँदैन । शोक हुँदैन, सत्वगुण प्रधान र एकान्तप्रिय हुन्छन् । ती विशेष चाहना नलिई रमाउँदै यताउता घुमिरहने गर्दछन् । सत्ययुगमा मानिसको आयु चार हजार मानवीय वर्षको हुन्छ भनी जान । त्यसबेला चारवर्ण र चार आश्रमका व्यवस्था भएका थिएनन् न त वर्णसङ्करताका कुरा नै थिए । सत्ययुगमा शुभ वा पापकर्ममा मानिसको लगाव हुँदैन ।

(ॠ) श्री नरसिंहपुराणम्, चतुः पञ्चाशोऽध्यायः - सत्ययुगमा तपस्या प्रधान हुन्छ ।

(२) त्रेतायुग :

(अ) श्रीलिङ्गपुराण, पूर्वभागः, एकोनचत्वारिंशोऽध्यायः- त्रेतायुग लागेपछि सत्ययुगका मानिसमा हुने जस्तो आनन्द र प्रसन्नता समयका कारण नाश हुन्छ ।

(आ) श्री नरसिंहपुराणम्, चतुः पञ्चाशोऽध्यायः- त्रेतामा ध्यान प्रधान हुन्छ । सत्ययुगमा दश वर्षको तपस्याले फाइने फल त्रेतामा एकै वर्षको तपस्याले पाइन्छ ।

(३) द्वापरयुग :

(अ) श्री नरसिंहपुराणम्, चतुः पञ्चाशोऽध्यायः- द्वापरमा यज्ञलाई महान बताइएको छ । सत्ययुगमा दश वर्षको तपस्याले फाइने फल द्वापरमा एक महिनाकै साधनाले सुलभ हुन्छ ।

(४) कलियुग :

(अ) श्री नरसिंहपुराणम्, चतुः पञ्चाशोऽध्यायः- घोर कलियुग लाग्दा ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र सबै जना धर्म, ब्राह्मण तथा देवतासँग विमुख हुनेछन् । सबै ब्याज (स्वार्थ) धर्ममा लाग्ने छन्, दम्भको आचरण गर्ने, एकअर्कामा दोष खोज्दै हिँड्ने र व्यर्थ अभिमानले दूषित विचारका हुनेछन् । पण्डित्याईंको गर्व राख्ने सबै मानिस सत्यलाई छोप्दछन् र सबै यही भन्दछन् कि-म नै सबभन्दा ठूलो हुँ । कलियुगमा सबै अधर्मप्रिय र परनिन्दक हुनेछन्, त्यसैले सबैको आयु कम हुनेछ । मानिसको आयु कम हुनाले विद्या आर्जन गर्न द्विज असमर्थ हुनेछन् । विद्याध्ययन शून्य हुनाले गर्दा त्यसबाट फेरी अधर्म बढेर जानेछ । ब्राह्मण आदि वर्णमा परस्परमा वर्णसंकरता आउने छ । ती कामी, क्रोधी, मूर्ख र व्यर्थको सन्तापले पीडित हुनेछन् । ब्राह्मण, क्षत्रिय र वैश्य आपसमा शत्रुता साँधी एकअर्कालाई मार्न चाहने हुनेछन् र ती सबै स्वधर्मबाट विमुख हुनेछन् । तप, सत्य भाषणले रहित ती शूद्रसमान हुनेछन् । उत्तम वर्णका तल खस्दछन् र नीच वर्णका उत्तम बन्नेछन् । राजाहरु लोभी तथा केवल धन कमाउनमै व्यस्त हुनेछन् । ती धर्मको खोल ओढेर त्यसैको आडमा धर्मलाई विध्वंश गर्ने हुनेछन् । समस्त अधर्मले सहित भएको घोर कलियुग आउँदा जो जो घोडा, रथ र हातीले सम्पन्न हुनेछन् तिनै राजा हुनेछन् । छोरा बाबुलाई र बुहारी सासूलाई काममा लगाउनेछन् ।स्त्रीहरु पतिपुत्रलाई छाडी पोइल जानेछन् । पुरुषको संख्या कम र स्त्रीहरुको बढी हुनेछ । कुकुर धेरै हुनेछन् र गाईको ह्रास हुनेछ । सबैको मनमा धनकै महत्व हुनेछ । सत्पुरुषको र सदाचारको सम्मान हुने छैन । बादल कतै वर्षने र कतै

नवर्षने हुनेछ । सारा बाटाहरु चोरले घेरिएका हुने छन् । मान्यजनको सेवामा नरहिकनै सबै जना सबै कुरा जान्दछु भनी घमण्ड गर्नेछन् । कोही यस्तो हुँदैन जसले आफूलाई कवि नठानोस् । मदिरा पिउनेहरु ब्रह्मज्ञानको उपदेश दिनेछन् । ब्राह्मण, क्षत्रिय र वैश्य शूद्रका सेवक हुनेछन् । घोर कलियुग आउँदा पुत्र पितासँग, शिष्य गुरुसँग र स्त्री पतिसँग द्वेष गर्नेछन् । सबैको चित्त लोभले आक्रान्त हुनेछ त्यसैले सबै दुष्कर्ममा लाग्नेछन् । द्विजहरु अर्काको अन्नका लोभी हुनेछन् । सबै परस्त्रीको सेवन गर्ने र परधन अपहरण गर्ने हुनेछन् । घोर कलियुग आउँदा अरुमा दोष देख्ने सबै व्यक्तिहरु धर्मपरायण पुरुषहरुको उपहास गर्नेछन् । ब्राह्मणहरु वेदको निन्दामा लागी व्रत पालना गर्ने छैनन् । तर्कवादबाट खराब विचार हुन जानाले गर्दा न तिनले यज्ञ गर्नेछन् न होम आदिमा नै लाग्ने छन् । द्विजहरु दम्भका लागिमात्र (श्राद्धादि) पितृयज्ञ आदि कर्म गर्नेछन् । मानिसहरु सत्पात्रलाई दान दिने छैनन् । मानिस दूध आदिका लागि मात्र गाईमा प्रेम राख्नेछन् । राजाका सिपाहीले धनका लागि ब्राह्मणलाई नै बाँध्नेछन् । द्विजहरु दान, यज्ञ र जप आदिको फल बेच्नेछन् । ब्राह्मणहरुले चाण्डालादिसँग पनि दान लिने छन् । कलियुगको प्रथम चरणमा पनि मानिस भगवान निन्दक हुन जानेछन् । कलियुगको अन्तमा कसैले भगवानको नाम सम्म पनि लिने छैनन् । कलियुगका द्विजहरुले शूद्रका पत्नीसँग सहवास गर्नेछन् र विधवासँग समागमका लागि लालायित हुनेछन् । कलियुगका द्विजहरु शूद्रान्न खाने हुनेछन् । त्यो बेला शुद्र संन्यासको चिह्न लिई न त द्विजको सेवामा लाग्नेछन् न त स्वधर्ममा नै । तिनले आफ्नो सुखका लागि जनै लगाउने छन् । जटा पाल्ने छन् र शरीरमा खरानी आदि दली हिँड्ने छन् । कूटबुद्धिमा निपुण शूद्रहरु धर्मको उपदेश गर्नेछन् । यस्ता अनेकौं पाखण्डी ब्राह्मण, क्षत्री र वैश्य कलियुगमा हुने छन् । वेदको स्वाध्यायबाट विमुख भई ब्राह्मणहरु गानाबजानामा लाग्नेछन् र शूद्रको मार्गलाई अनुशरण गर्नेछन् । मानिस गरिब, झूटो भेषधारी र मिथ्याभिमानले दूषित हुनेछन् । कलियुगमा अर्काको धेरै खोस्दछन् तर आफ्नो कसैलाई दिँदैनन् । त्यो बेला राम्रो बाटोमा हिँड्ने ब्राह्मण (पनि) सधैं दान लिँदै हिँड्नेछन् । सबै व्यक्ति आत्मप्रशंसक र परनिन्दक हुनेछन् । देवता, वेद र ब्राह्मणप्रति सबैको विश्वास गुम्नेछ । सबै वेदविरोधी बोल्ने र ब्राह्मणका द्वेषी हुनेछन् । सबै स्वधर्म त्याग्ने र कृतघ्न र आफ्नो वर्णधर्म विरुद्धको पेसाबाट जीवन चलाउने हुनेछन् । कलि युगमा मानिस भिखारी, चुगलखोर, परनिन्दक र आत्मप्रशंसक हुनेछन् । मानिस सधैं अर्काको धन

अपहरणका बारेमा सोची रहने छन् । यदि तिनलाई अर्काको घरमा खाने अवसर मिल्यो भने खुब खुशी हुनेछन् । प्रायः त्यही दिन अरुलाई देखाउन देवताका पूजामा लाग्ने गर्दछन् । परनिन्दामा तत्पर रहने ती ब्राह्मण त्यहाँ नै सबैका साथमा एउटै आसनमा बसी भोजन गर्नेछन् । त्यस समयमा ब्राह्मण, क्षत्रि, वैश्य र शूद्र सबै जातका मानिस अत्यन्त कामुक हुनेछन् र एकअर्कासँग सम्पर्क स्थापित गरी वर्णसङ्कर हुनेछन् । वर्णसङ्करको स्थितिमा गुरु-शिष्य, पिता-पुत्र, पति-पत्नीको विचार रहने छैन । नरकभोगी ब्राह्मणादि वर्ण प्रायः शूद्रवृत्तिले जीविका चलाउनेछन् र नरकभोगी हुनेछन् । मानिसमा सदै खँडेरीको त्रास रहनेछ र ती सधैँ आकाशतिर फर्केर पानीपर्ने प्रतिक्षामा रहने छन् । त्यो बेला सबै मानिस सधैँ भोकको पीडाले डराइ रहनेछन् । सन्यासीहरु पनि अन्न प्राप्तीका लागि मात्रै मानिसलाई शिष्य बनाउँदै हिँड्नेछन् । स्त्रीहरु दुबै हातले कपाल कन्याउँदै पति तथा गुरुजनका हितकारी आज्ञाको अवहेलना गर्ने छन् । द्विजातिहरु जबजब यज्ञ र हवन छोड्दै जान्छन् तबतब बुद्धिमानले कलि वृद्धि हुँदै गएको अनुमान गर्नू । त्यो बेला सारा धर्म नष्ट हुनाले यो सारा संसार श्रीहीन हुनेछ । जो मानिस भगवानको भजनमा तत्पर रहन्छ, तिनलाई कलियुगले बाधा दिन सक्दैन । द्वापरमा दानलाई महान बताइएको छ । सत्ययुगमा दश वर्षको तपस्याले फाइने फल कलिमा एक दिनरातको प्रयत्नले नै प्राप्त हुन्छ । सत्ययुगमा ध्यान, त्रेतामा यज्ञ र द्वापरमा पूजा गर्नाले जुन फल पाइन्छ त्यो फल कलियुगमा केवल केशवको कीर्तनले पाइन्छ । घोर कलियुग आउँदा समस्त जगतका आधार परमार्थस्वरुप भगवान विष्णुको ध्यान गर्ने मानिसलाई कलिबाट बाधा पुग्दैन । अहो ! जसले एकपटक मात्र पनि भगवान विष्णुको पूजा गरेका छन् ती धेरै सौभाग्यशाली हुन् । सबै कर्म छोडेकाहरुलाई घोर कलियुग आउँदा गरिने वेदोक्त कर्ममा हुने न्यूनता वा अधिकताको दोष हुँदैन । त्यसमा भगवानको स्मरण नै पूर्ण फलदायक हुन्छ ।जसले हरि, केशव, गोविन्द, वासुदेव, जगन्मय, जनार्दन, जगद्धाम, पीताम्बरधर, अच्युत आदि नामको उच्चारण गर्दछन् तिनलाई कलियुगले कहिल्यै बाधा पुऱ्याउँदैन । ओहो ! सबैलाई भय दिने यो कलिमा जो भगवान विष्णुको आराधनामा लागि रहन्छन् वा आराधनाको सङ्गत नै गर्दछन् ती महात्मा धेरै नै भाग्यशाली हुन् । जो हरिनामको जप गर्दछन्, हरिकीर्तनमा लागी रहन्छन् र सधैं हरिको पूजा नै गर्ने गर्दछन् ती कृतकृत्य नै हुन्छन् यसमा शङ्का छैन ।

(आ) श्रीविष्णुपुराण, चतुर्थेऽशे चतुर्विंशोऽध्यायः- कलिमा धर्म र अर्थ अलिअलि क्षय

हुनाले गर्दा संसारको क्षय हुन्छ । त्यो बेलामा धन नै कुलिनताको कारण हुनेछ । बल नै सबै धर्मको कारण हुनेछ । एकआपसको रुचि नै वैवाहिक सम्बन्धको कारण हुनेछ । स्त्रीत्व नै उपभोगको कारण हुनेछ (कुल, जाति हेरिन्न) । मिथ्या भाषण नै सफलताको कडी हुनेछ । उन्नत पानी नै बस्ने कारण हुनेछ (पुण्यक्षेत्र नभई जलवायु हेरेर बस्ने) । जनै नै ब्राह्मणको कारण हुनेछ । रत्न आदि धातु नै प्रशंसाको कारण हुनेछ । बाहिरी चिह्न नै आश्रमका कारण हुनेछ । अन्याय नै बाँच्ने कारण हुनेछ । दुर्बलता नै बेरोजगारको कारण हुनेछ । निडर भई धृष्टतापूर्वक बोल्नु नै पण्डित्याईंको कारण हुनेछ । निर्धनता नै साधुत्वको कारण हुनेछ । स्नान नै प्रसाधनको कारण हुनेछ । दान नै धर्मको कारण हुनेछ । स्वीकार्नु नै विवाहको कारण हुनेछ (संस्कार गरिन्न) । सुकिलामुकिलालाई नै सुपात्र सम्भिmइनेछ । टाढाको जल नै तीर्थजलको कारण हुनेछ । छद्म भेष धारण गर्नु नै गौरवको कारण हुनेछ । यसरी पृथ्वीमा अनेकौं दोष फैलिनाले सबै वर्णमा जो जो बलिया छन् तिनै राजा हुनेछन् । यसरी अति लोभी राजाको करभार सहन नसकी जनता पहाड र गुफाको आश्रय लिनेछन् । मह, सागपात, कन्दमूल, फलफूल, पात र फूल आदि खाएर दिन काट्नेछन् । रुखका पात र बोक्रा नै तिनका लाउने ओढ्ने कपडा हुनेछ, धेरै सन्तान हुनेछन्, सबै जना शीत, वायु, घाम र वर्ष आदिको कष्ट सहनेछन् । कोही पनि तीस वर्षभन्दा बढी बाँच्ने छैनन् ।यसरी कलिमा यि सबै जनसमूदाय निरन्तर क्षीण हुँदै जानेछन् ।

(इ) श्रीपराशरस्मृतिः, प्रथमोऽध्यायः- कलियुगमा अधर्मले धर्मलाई, असत्यले सत्यलाई, सेवकले राजालाई र स्त्रीले पुरुषलाई जितेका हुन्छन् । कलियुगमा अग्निहोत्रीहरु घट्दछन्, मान्यजनको पूजा गर्ने कुराको नाश हुन्छ तथा कुमारीहरु बच्चा जन्माउँदछन् ।

(ई) श्रीविष्णुपुराण, षष्ठेंऽशे प्रथमोऽध्यायः- कलियुगमा मानिसको प्रवृत्ति वर्णाश्रम धर्मको अनुकूल रहँदैन तथा न त उ ऋक्, साम, यजुरूपी त्रयीधर्मको सम्पादन गर्ने नै हुन्छ । त्यो बेला धर्मविवाह, गुरुशिष्य सम्बन्ध, दाम्पत्यक्रम र अग्निमा देवयज्ञका काम पनि हुने छैनन् । कलिमा जो बलियो छ त्यही सबैको मालिक हुनेछ, जुनसुकै कुलमा उत्पन्न भएको भए पनि उ सबै वर्णको कन्या ग्रहण गर्न समर्थ हुनेछ । त्यो बेला द्विजाति जुनकुनै उपायले दीक्षित हुनेछन् र जस्तोसुकै कर्मलाई पनि प्रायश्चित मानिनेछ । कलिमा जसको मुखबाट जे निक्लन्छ त्यसैलाई शास्त्र सम्भिmइनेछ, त्यतिखेर सबै (भूतप्रेत आदि) देवता हुनेछन् र सबैका सबै आश्रम हुनेछन् । उपवास,

तीर्थाटन, धनदान तथा तप आदि कुरा आफ्नो रुचि अनुसार अनुष्ठान गर्नुलाई नै धर्म सम्भिइन्छ । कलियुगमा थोरै धनले नै मानिसमा धनीको अभिमान हुनेछ र कपाल नै स्त्रीको सुन्दरताको अभिमान हुनेछ । त्यतिखेर सुन, मणि, रत्न र वस्त्र कम हुनाले स्त्रीहरु केश श्रृङ्गारले नै आफूलाई विभूषित पार्नेछन् । जुन लोग्ने धनहीन हुन्छ त्यसलाई स्त्रीले छोड्नेछन् । कलिमा धनी व्यक्ति नै स्त्रीको पति हुनेछ । जसले बढी धन दिन्छ (जति निन्दनीय भए पनि) त्यही स्वामी हुनेछ । यो धन-दानको सम्बन्ध नै स्वामित्वको कारण हुनेछ, कुलीनता होइन । कलिमा सबै धन सङ्ग्रह घर बनाउनमै सकिनेछ, बुद्धि धन जम्मा गर्नमा नै लागि रहनेछ तथा सबै सम्पत्ति आफ्नै उपभोगले नै नष्ट हुनेछ । कलिमा स्त्रीहरु सुन्दर पुरुषका कामनाले स्वेच्छाचारिणी हुनेछन् र पुरुष अन्यायले कमाएको धनको चाहना गर्ने हुनेछन् । हे द्विज ! कलिमा आफ्ना हित चाहनेले अनुरोध गर्दा पनि मानिस एकएक पैसाका लागि पनि स्वार्थहानी गर्ने छैनन् । कलिमा ब्राह्मणका साथ शुद्र आदि समानताको दाबी गर्नेछन् र दूध दिएका कारणले नै गाईको सम्मान हुनेछ । त्यो बेला सारा प्रजा प्यासले व्याकुल भई प्रायः खडेरीको डरले सधैँ आकाशतिर हेरिरहने छन् । मानिस तपस्वीझैँ कन्दमूल, फलफूल आदिकै सहारामा रहनेछन् तथा खडेरीका कारण दुःखी भएर आत्महत्या गर्नेछन् । कलिमा असमर्थ जन सुख तथा आनन्द नष्ट हुनाले गर्दा प्रायः सधैँ भोकमरी र पीडा नै भोग्नेछन् । कलि लागेपछि मानिस ननुहाई खानेछन्, अग्नि-देवता र अतिथिको पूजा गर्ने छैनन् न त पिण्डदान नै गर्नेछन् । त्यसबखत स्त्रीहरु विषयलोलुप, साना शरीरका, धेरै खाने, धेरै सन्तान जन्माउने र मन्दभाग्या हुनेछन् । तिनले दुवै हातले कपाल कन्याउँदै आफ्ना गुरुजन र पतिको आदेशलाई अनादरपूर्वक खण्डन गर्नेछन् । कलिमा स्त्रीहरु आफ्नै पेटपाल्नमा तत्पर, क्षुद्र चित्तका, शारीरिक शौचले हीन तथा कटु र भूटो बोल्ने हुनेछन् । त्यो बेलाका कुलाङ्गनाहरु निरन्तर दुश्चरित्र पुरुष चाहने र दुराचारिणी हुनेछन् तथा पुरुषका साथ असद् व्यवहार गर्नेछन् । ब्रह्मचारीहरु वैदिक व्रत नगरी वेद पढ्नेछन् । गृहस्थीहरुले न हवन गर्नेछन् न त सत्पात्रलाई उचित दान नै दिनेछन् । वानप्रस्थीहरु ग्राम्य भोजन स्वीकार्नेछन् र सन्यासी आफ्ना स्नेह-बन्धनमा नै बाँधिई रहनेछन् । कलियुग लागेपछि राजाहरु प्रजाको रक्षा गर्ने छैनन् उल्टो करको बहानामा प्रजाको धन नै खोस्नेछन् । त्यसबेला जोजो सँग धेरै हाती, घोडा र रथ हुनेछ ती ती राजा हुनेछन् तथा जो जो शक्तिहीन छन् ती ती सेवक हुनेछन् । वैश्यहरु कृषि ब्यापार आदि आफ्नो कर्म छोडी शिल्पकारिता आदिले जीवन

निर्वाह गर्दै शूद्रवृत्तिमा नै लाग्नेछन् । आश्रमादि चिह्नले रहित अधम शूद्रहरु सन्यास लिई भिक्षावृत्तिमा लाग्नेछन् र लोकबाट सम्मानित भई पाषण्ड वृत्तिको आश्रय लिनेछन् । प्रजा भोकमरी र करको पीडाले अत्यन्त उपद्रवयुक्त र दुःखी भई यस्तो देशमा जानेछन् जहाँ गहुँ र जौ प्रशस्त पाइनेछ । त्यो बेला वेदमार्गको लोप, मानिसमा पाषण्डको प्रचुरता र अधर्म वृद्धि हुनाले प्रजाको आयु कम हुन जानेछ । मानिसले शास्त्रविरुद्ध घोर तपस्या गर्नाले तथा राजाका दोषका कारण प्रजाको बाल्यावस्थामा नै मृत्यु हुन थाल्नेछ । कलिमा पाँच, छ वा सात वर्षकी स्त्री तथा आठ, नौ वा दश वर्षका पुरुषकै सन्तान हुनेछन् । बाह्र वर्षकै उमेरमा मानिसको कपाल फुल्न थाल्दछ र कुनै पनि व्यक्ति बीस वर्षभन्दा बढी बाँच्ने छैन । कलिमा मानिस मन्दवुद्धि, व्यर्थ चिह्न धारण गर्ने र दुष्ट चित्तका हुनेछन् त्यसैले ती अल्पकालमा नै नष्ट हुनेछन् । जबजब धर्मको अधिक हानी देखिने छ तब बुद्धिमानले कलि बढेको अनुमान गर्नु पर्दछ । जबजब पाषण्ड बढेको देखिने छ तब महात्माहरुले कलि बढेको समझिनु पर्दछ । जबजब वैदिक मार्गको अनुशरण गर्ने सत्पुरुषको अभाव हुन्छ तबतब बुद्धिमानले कलि बढेको समझिनु पर्दछ । जब धर्मात्मा पुरुषले शुरु गरेको कार्यमा असफलता हुन्छ तब पण्डितजनले कलिको प्रधानता समझिनू । जबजब यज्ञका अधीश्वर भगवान् पुरुषोत्तमको मानिस यज्ञद्वारा यजन गर्ने छैनन् तबतब कलिको प्रभाव नै समझिनु पर्दछ । जब वेदवादमा प्रीतिको अभाव हुन्छ र पाषण्डमा प्रेम हुन्छ तब बुद्धिमान् प्राज्ञ पुरुषले कलि बढेको जान्नू । कलिमा मानिस पाषण्डले वशीभूत हुनाले सबैका रचयिता तथा प्रभु जगत्पति भगवान् विष्णुको पूजा गर्ने छैनन् । त्यसबखत् मानिस पाखण्डको वशमा परी भन्नेछन्-यी देवता, द्विज, वेद र जलले हुने शौचमा के राखेको छ ? । कलि आएपछि वृष्टि अल्पजलदायक हुनेछ, खेतीको उब्जा कम हुनेछ र फल आदि अल्प सारयुक्त हुनेछन् । कलिमा प्रायः सनले बनेको सबैको लुगा हुनेछ, प्रायः शमीका रुख हुनेछन् र चारैवर्ण अधिक गरी शूद्रसरह हुनेछन् । कलि आउँदा धान्य अत्यन्त साना हुनेछन्, प्रायः बाख्राकै दूध पाइनेछ र लेपनको साधन काँस मात्र हुनेछ । कलिमा सासुससुरा नै मानिसका गुरु हुनेछन् र चित्तहारिणी पत्नी र साला नै भलो चिताउने हुनेछन् । मानिस आफ्नो ससुराको अनुसरण गर्ने भई भन्नेछन् कि-को कसको बाबु र को कसको आमा हो, सबै पुरुष आफ्नो कर्म अनुसार जन्मने मर्ने गरिरहन्छन् । त्यो बेला अल्पबुद्धि पुरुष पटकपटक वाणी, मन र शरीर आदिका दोषको वशमा परी प्रतिदिन पुनःपुनः पाप गरिहन्छन् । शक्ति, शौच र लाज

नभएको पुरुषलाई जेजे दुःख हुन सक्दछ कलिमा ती सबै दुःख अगाडी आउनेछन् । त्यस बखत संसार स्वाध्याय र वषट्कारले हीन एवं स्वधा र स्वाहाले वर्जित हुनाले गरिकन कतैकतै केहीकेही धर्म रहनेछ ।

(उ) श्रीकूर्मपुराण, पूर्वविभागे सप्तविंशोऽध्यायः- यो भयङ्कर कलिमा मानिस पापाचारी तथा वर्ण र आश्रमधर्म रहित महान् पापी हुनेछन् ।

(ऊ) श्रीकूर्मपुराण, पूर्वविभागे अष्टाविंशोऽध्यायः- कलिमा मानिस सदा तमोगुणले जेलिन्छन् । यसैले माया, गुणमा दोषदर्शन तथा तपस्वीको वधमा नै लागिरहन्छन् । कलिमा ज्यानजाने रोग, अनवरत भोकको कष्ट, खडेरीको भीषण भय र देशको उलटपलट भइरहन्छ । कलिमा जन्मेका दुष्ट मानिस अधार्मिक, सदाचारले रहित, अत्यन्त रिसाहा, दुर्बल चित्तका, लोभी र भूट बोल्ने हुन्छन् । ब्राह्मणका असत् उद्देश्य, असत् अध्ययन, दुराचार तथा दूषित शास्त्रको अभ्यास एवं खराब कर्मका दोषले प्रजामा भय छाइरहन्छ । कलिमा द्विजाति वेद अध्ययन गर्दैनन् न त यज्ञ नै गर्दछन् । अल्प बुद्धि हुनेहरु यज्ञ गर्दछन् र अन्यायपूर्वक वेद पढ्दछन् । कलिमा शुद्रको ब्राह्मणका साथमा मन्त्र, योनि, शयन, आसन र भोजन मार्फत सम्बन्ध हुनेछ । अधिकतर राजा शूद्र हुनेछन् जो वास्तवमा राजा हुन योग्य हुँदैनन् तिनले ब्राह्मणलाई पीडित गर्नेछन् । भ्रूणहत्या र वीरहत्या प्रचलित हुनेछ । कलिमा द्विजातिहरु स्नान, होम, जप, दान, देवपूजा तथा अन्य शुभ कर्म पनि गर्ने छैनन् । कलिमा महादेव शंकर, पुरुषोत्तम विष्णु, ब्राह्मण, वेद, धर्मशास्त्र र पुराणलाई मानिसले निन्दा गर्दछन् । सबैजना वेदमा नबताइएका अनेक प्रकारका कर्म गर्दछन् तथा ब्राह्मणलाई पनि आफ्नो कर्ममा रुचि हुने छैन । मानिस खराब आचरणका र व्यर्थको पाखण्डले युक्त हुन जानेछन् र संसार परस्परमा धेरै याचना गर्ने हुन जानेछ । कलिमा जनपद अन्नबिक्रयी, चौबाटो वेद बेच्ने ठाऊँ तथा स्त्रीहरु वेश्यावृत्तिका हुनेछन् । युगको अन्त आउँदा सेता दाँतका, जिन नामका, मुण्डित, काषायवस्त्रधारी शूद्रमाथि धर्माचरण गर्न थाल्नेछन् । मानिस अनाज र वस्त्र चोर्ने हुनेछन् । चोरले चोरकै चोरी गर्नेछ र अरु चोर त्यो चोरको चोर्नेछन् । दुःख धेरै हुनेछ, आयु कम हुनेछ र शरीरमा आलस्य र रोग रहनेछ । अधर्ममा विशेष लगाव हुनाले कलिमा सबै व्यवहार तामस हुनेछन् । कोही पहेँलो वस्त्र लगाउने, कोही जनै-टुपी नपाल्ने सम्प्रदायी, कोही कापालिक, कोही वेदबिक्रयी र कोही तीर्थविक्रयी हुनेछन् । कलिमा राजाको संरक्षण पाएर कमबुद्धिका शूद्र आसनमा रहेका द्विजलाई देखेर सो अनुसार

व्यवहार गर्ने छैनन् तथा श्रेष्ठ द्विजलाई प्रताडित गर्दछन् । कलिमा समयको प्रभावले द्विजका बीचमा शूद्र उच्च आसनमा बस्दछन् तर थाहा पाएर पनि राजाले तिनलाई दण्ड दिँदैनन् । कम ज्ञान, कम भाग्य तथा कम बल भएका द्विज फूल मनोविनोदका साधन परिहास आदि तथा अन्य माङ्गलिक पदार्थले शूद्रलाई पूजा गर्दछन् । शूद्रहरु पूजित हुने श्रेष्ठ द्विजतिर हेर्दा पनि हेर्दैनन् तथा द्विजहरु सेवाको लागि तिनको ढोका मा उभिएर बस्नेछन् । कलिमा शुद्रबाट बाँच्ने ब्राह्मणहरु बाहनमा रहेको शुद्रलाई घेरेर स्तुतिले उनको प्रशंसा गर्दछन् र सेवा गर्दछन् । शूद्रबाट पालिने (ब्राह्मण) शुद्रलाई वेद पढाउँछन् । अति नास्तिक (शुद्र) वैदिक मन्त्र पढ्दछन् । जसको श्रेष्ठ द्विजकोरुपमा समाजमा स्थान हुन्छ तिनले (आफ्ना) तप र यज्ञको फललाई बेच्ने हुन्छन् । (आलस्य र प्रतिष्ठाका लागि) सयौ हजारौं मानिस सन्यासी हुनेछन् । (कलिमा मानिस) पढेको बिर्सन्छन् । अध्ययनको फल ज्ञानका लागि उत्सुक हुँदैनन् । ती लौकिक गीतले देवताको स्तुति गर्दछन् । कलिमा ब्राह्मण र क्षत्रिय वाममार्गी, पाशुपताचारी तथा पाञ्चरात्रिक हुन जानेछन् । ज्ञान तथा कर्म लोप हुनाले र मानिस निष्क्रिय हुनाले गर्दा कीरा, मुसा र सर्पले मानिसलाई कष्ट पुर्‍याउनेछन् । प्राचीनकालमा दक्षका यज्ञमा दधीचका श्रापले दग्ध भएका द्विज ब्राह्मणका कुलमा उत्पन्न हुनेछन् । कलिको अन्ततिर तमोगुणी मनका मानिस महादेवको निन्दा गर्दछन् र व्यर्थका धर्मको आचरण गर्दछन् । अरु महात्मा गौतमका श्रापले दग्ध भएका मानिस थिए ती सबै ब्राह्मण आदि आ-आफ्ना जातमा उत्पन्न हुनेछन् । वेदले निषेध गरेको व्रत र आचारण गर्ने दुराचारी तथा व्यर्थको श्रम गर्नेहरु विष्णु तथा ब्रह्मवादी ब्राह्मणको निन्दा गर्नेछन् । तमोगुणले भरिएको मनका तथा देखावटी धर्माचरण गर्ने अधमहरु नानाथरी प्रलोभन देखाएर सबैलाई मोहित पार्नेछन् । कलिमा लोकका ईश्वर देवताका पनि देवता श्रेष्ठ महादेव रुद्र मानिसका दृष्टिमा देवता रहने छैनन् । तैपनि भक्तको कल्याणको कामना र श्रौत एवं स्मार्त धर्मको स्थापनाका लागि शंकरले अनेक अवतार धारण गर्नेछन् । तिनले समस्त वेदान्तको साररुपी त्यो ब्रह्मसंज्ञक ज्ञानलाई र वेदविहीत धर्म शिष्यलाई प्रदान गर्नेछन् । जो ब्राह्मण कुनै उपायले शंकरको सेवा गर्नेछन् ति कलिको दोषलाई जिती परमपद प्राप्त गर्नेछन् । अनेक दोषको कलिको यो महान् गुण छ कि यो युगमा मानिसले अनायास महान् पुण्य प्राप्त गर्दछ । यसैले महेश्वर सम्बन्धी युग पाई विशेष गरी ब्राह्मणले सबै प्रकारका प्रयत्नले ईशान रुद्रको शरण पर्नु पर्दछ । जसले प्रसन्न मनले विरूपाक्ष, कृत्तिवास, ईशान

रुद्रलाई नमस्कार गर्दछन् तिनले परमपद पाउँछन् । जसरी रुद्रलाई गरिएको नमस्कारले निश्चितरुपमा सबै कामनालाई पूर्ण गर्दछ त्यसरी अरुलाई नमस्कार गर्दा त्यस्तो फल पाईदैन । यस प्रकार कलिको दोष हटाउने एकमात्र उपाय हो कि महादेवको नमस्कार, उनको ध्यान र शास्त्रानुसार दान यस्तो वेदको मत छ । यसैले परमपदको चाहना भए अन्य महेश्वरप्रदत्त शक्तिका देवतालाई छोडी एकमात्र देव महादेवको आश्रय ग्रहण गर्नुपर्दछ । जो देववन्दित शिवको अर्चना गर्दैनन् तिनले गरेका दान, तप, यज्ञ र जीवन व्यर्थ नै हुन्छ । सत्यवतीका पुत्र व्यास वा देवकीपुत्र कृष्णलाई छाडी अरु कोही पनि अर्जुनका समान शंकरको भक्ति गर्ने न भयो न त हुने नै छ ।

(ऋ) श्रीविष्णुपुराण, षष्ठेंऽशे प्रथमोऽध्यायः- परन्तु कलिमा मानिस थोरै प्रयत्न गर्नाले पनि जुन् अत्यन्त उत्तम पुण्यराशि पाउँछ त्यो सत्ययुगमा ठूलो तपले प्राप्त गर्न सकिन्छ ।

(ॠ) श्रीविष्णुपुराण, षष्ठेंऽशे द्वितीयोऽध्यायः- जुन फल सत्ययुगमा दश वर्ष तपस्या, ब्रह्मचर्य र जप आदि गर्नाले पाइन्छ त्यो फल त्रेतामा एक वर्ष, द्वापरमा एक महिना र कलिमा केवल एक दिनरातमा पाउँछ, यसैले मैले कलियुगलाई श्रेष्ठ भनेको हुँ । जुन फल सत्ययुगमा ध्यान, त्रेतामा यज्ञ र द्वापरमा देवार्चन गर्नाले पाइन्छ त्यो फल कलिमा श्रीकृष्णको नाम कीर्तनले पाइन्छ । कलिमा थोरै परिश्रमले नै पुरुषलाई महान् धर्मको प्राप्ति हुन्छ त्यसैले म कलियुगबाट अति सन्तुष्ट छु । द्विजातिले पहिले ब्रह्मचर्यको पालना गर्दै वेदाध्ययन गर्नु पर्दछ र फेरी स्वधर्माचरणले कमाएको धनले विधिपूर्वक यज्ञ गर्नु पर्दछ । यसमा पनि व्यर्थ कुराकानी, व्यर्थ भोजन र व्यर्थ यज्ञ तिनका पतनका कारण हुन्छन् । यसैले तिनले सदा संयमी रहनु आवश्यक हुन्छ । सबै काममा विधि विपरित गर्दा तिनलाई दोष लाग्छ । यहाँसम्म कि खानपिन पनि ती इच्छानुसार भाग गर्न सक्दैनन् । सबै कार्यमा परतन्त्रता रहने कारणले तिनले बडा कष्टले पुण्यलोक पाउँदछन् । परन्तु जसलाई केवल (बिनामन्त्रको) पाकयज्ञको अधिकार छ ती शूद्र द्विजको सेवाले नै परम गति पाउँदछन् यसैले ती अरु जातिभन्दा धन्य छन् । शूद्रलाई खान हुने नहुने पिउन हुने नहुने केही नियम छैन यसैले मैले उसलाई साधु भनेको हुँ । पुरुषले आफूले धर्मले कमाएको धनले नै सुपात्रलाई दान र विधिपूर्वक यज्ञ गर्नु पर्दछ । यस्तो धन कमाउन र रक्षा गर्न पनि धेरै दुःख हुन्छ । त्यस्तै त्यसलाई अनुचित काममा लगाउने जुन कष्ट भोग्नु पर्छ त्यो पनि थाहा

भइसक्यो । यसरी पुरुषहरु यी र यस्तै अरु कष्टदायक उपायले प्राजापत्यादि शुभ लोकलाई पाउँदछन् । तर स्त्रीहरु त तन-मन-वचनले पतिको सेवा गर्नाले नै तिनका हितकारिणी भई पतिसमान शुभ लोक प्राप्त गर्दछन् जुन पुरुषलाई अत्यन्त परिश्रमले मिल्दछ । यसैले मैले तेश्रो पटक स्त्रीलाई साधु हुन् भनेको हुँ ।

## चतुर्युग

(१) श्रीविष्णुपुराण, षष्ठेंऽशे प्रथमोऽध्यायः- (प्रत्येक मन्वन्तरमा) शुरुको सत्ययुग र अन्तिम कलियुगलाई छोडी बाँकी सबै चतुर्युग स्वरुपले समान हुन्छन् । जसरी पहिलो सत्ययुगमा ब्रह्मा जगत्को रचना गर्दछन् त्यसरी नै अन्तिम कलियुगमा त्यसको संहार गर्दछन् ।

(२) श्रीविष्णुपुराण, षष्ठेंऽशे तृतीयोऽध्यायः- बाह्र हजार दिव्य वर्षको एक चतुर्युग हुन्छ ।

(३) श्रीकूर्मपुराण, पूर्वविभागे सप्तविंशोऽध्यायः - सत्य, त्रेता, द्वापर तथा कलि यिनै चार युग हुन् ।

(४) विष्णुस्मृतिः, अध्याय बीस : बाह्र हजार दिव्य वर्षको एक चतुर्युग हुन्छ ।

(५) श्रीलिङ्गपुराण, पूर्वभागः, एकोनचत्वारिंशोऽध्यायः - पहिला सत्य, त्यसपछि त्रेता, द्वापर र कलियुग आउँदछन् भन्ने कुरा जानी राख । संक्षेपमा यी चार युग हुन् ।

## चतुर्युगको मान्यता कहाँ हुन्छ ?

(१) श्रीविष्णुपुराण, द्वितीयेंऽशे तृतीयोऽध्यायः- यो भारतवर्षमा मात्र सत्य, त्रेता, द्वापर र कलि नामका चार युग हुन्छन्, अन्त कतै होइन ।

(२) श्रीशिवपुराण, उमासंहिताः, अष्टादशोऽध्यायः- यो भारतवर्षमा सत्य आदि नामका चार युग हुन्छन्, अरु (जम्बुद्वीप बाहेकका) कुनै द्वीपमा हुँदैनन् ।

(३) श्रीशिवमहापुराण, वायवीयसंहिता, अष्टमोऽध्यायः- भारतवर्षमा चार युग हुन्छन् भनेर विद्वानहरूले बताएका छन् ।

## कल्प

(१) विष्णुस्मृतिः, विंशोऽध्यायः- हजार चतुर्युगको १ कल्प हुन्छ ।

| युगका नाम | अवधि (दिव्यवर्षमा) | अवधि (मानवीय वर्षमा) |
|---|---|---|
| सत्य | ४,८०० | १७,२८,००० |
| त्रेता | ३,६०० | १२,९६,००० |
| द्वापर | २,४०० | ८,६४,००० |
| कलि | १,२०० | ४,३२,००० |
| जम्मा (एक चतुर्युग ) | १२,००० | ४३,२०,००० |

## ब्रह्माको आयु

(१) श्रीविष्णुपुराण, षष्ठेंऽशे प्रथमोऽध्यायः- मानिसको दुई हजार चतुर्युग बराबर ब्रह्माका एक दिनरात हुन्छन् ।

(२) श्रीविष्णुपुराण, षष्ठेंऽशे तृतीयोऽध्यायः- एक हजार चतुर्युग बराबर ब्रह्माको एक दिन हुन्छ ।

## सङ्कल्प

**परिभाषा :**

(क) के.यन.स्वामी : (१) कुनै काम गर्ने पक्का विचार । (२) सभा समिति आदिको कुनै विषयमा विचारसाथ गरिएको निधो । (३) दान, व्रत, देवता वा पितृपूजन आदिमा जौ, तिल, जल, कुश हातमा लिएर कामनासिद्धिका लागि पढिने वाक्य, जसमा संवत्सर, अयन, महिना, पक्ष, ग्रहस्थिति, देश ठाउँ, गोत्र, प्रवर र नाम आदि भनिन्छ ।

(ख) नेपालका राजा प्रताप सिंह शाहले लेखेको “पुरश्चर्याणव” नामक ग्रन्थमा “मेरुतन्त्र” नामक ग्रन्थलाई उद्धृत गर्दै सङ्कल्पका सम्बन्धमा यसो भनिएको छ :-

**संवत्सरायने मासपक्षपञ्चाङ्गमेव च ।**
**नवग्रहस्थितिं घस्रभागं मुहूर्तिकं त्विति ॥**
**स्वदेशभेदाँस्तत्तुल्यान् कामनासहितान् वदेत् ।**
**द्वीपेऽमुकेऽमुके खण्डेऽमुके वर्षे च नीवृती ॥**

**अमुके चामुके क्षेत्रे गोत्रप्रवरमुच्चरेत् ।**
**स्वनाम जातिनामान्तं द्विजाच्छर्म च वर्म च॥**
**गुप्तो दासोऽथामुकस्य......।**

संवत्सर, अयन, महिना, पक्ष, पञ्चाङ्ग (वार, तिथि, नक्षत्र, करण र योग), नौ वटा ग्रहको स्थिति, सूर्यले भोग गरेको समय, मुहूर्त, कर्मस्थल रहेको देशको परिचय, कर्मगर्ने उद्देश्य, द्वीप (जंबू आदि) को नाम, खण्ड (भरतखण्ड आदि) को नाम, वर्ष ( भारतवर्ष आदि) को नाम, क्षेत्र (पाशपत आदि) को नाम, गोत्र, प्रवर, आफ्नो न्वारनको नाम नाम पछाडि शर्मा, वर्मा, गुप्ता, दास उल्लेख गरी सङ्कल्प गर्नु पर्दछ ।

(ग) योगिनीतन्त्र, प्रथमखण्ड, दोश्रो पटलमा जपका विषयमा बताउने क्रममा यस्तो लेखिएको छ :

**असङ्कल्प्यत्व सत्यं स्यान्न्यूनाधिकमथापि वा ।**
**न सम्यक्फलभाग्भूयात्तस्मान्नियममाचरेत्॥**
**ताम्रपात्रं सदूर्वञ्च सतिलं जलपूरितम् ।**
**सकुशं सकलं देवि गृहीत्वाचम्य कल्पतः॥**
**अभ्यर्च्य च शिरःपद्मे श्रीगुरुं करुणामयम् ।**
**यक्षाशवदनो वापि देवेन्द्राशामुखोऽपि वा॥**
**मासं पक्षं तिथिञ्चैव देवपर्वादिकं तथा ।**
**आद्यन्तकालमुच्चार्य गोत्रं नाम च कामिनाम्॥**
**कर्माण्यद्य करिष्येऽहमैशान्यामुत्सृतेत्पयः ।**

सङ्कल्प नगरी जुन जप गरिन्छ अथवा नियमभन्दा बढी वा घटी जुन जप गरिन्छ, त्यसले राम्रो फल दिँदैन । यसैले नियमपूर्वक जप गर्नू । हे देवी ! तामाको भाँडामा दूबो र तिल सहितको जल एवं कुश समाती आचमन गर्नू । त्यसपछि शिरपद्म (?) मा करुणामय गुरुलाई अर्चना गरी उत्तर वा पूर्व दिशातिर मुख फर्काई महिना, पक्ष, तिथि, देवपर्व, आदिदेखि अन्तसम्मका कालसमय, जजमानको गोत्र र जजमानको

नाम उच्चारण गर्दै "म यो कर्म वा जप गर्दैछु" भनी हातमा लिइएको जल (कुश सहित) ईशान दिशामा खसालि दिनू ।

(घ) नेपाली बृहत् शब्दकोशमा सङ्कल्पको परिभाषा यसरी दिइएको छ :- (१) कुनै इच्छा साकार पार्ने अठोट वा कुनै काम गर्ने दृढ निश्चय; मनको आँट; मनसुबा । (२) देव कार्य तथा पितृकार्य गर्दा जजमानले जौ, तिल, कुश र पानी हातमा लिएपछि पुरोहितद्वारा पढिने प्रतिज्ञावाक्य वा दानवाक्य । (३) फलको आशाले कुनै धार्मिक वा पुण्यकार्य गर्ने दृढता । (४) तत्काल उपस्थित कुनै समस्याका बारेमा निर्णय गरी परिणाम निकालिने आकस्मिक प्रस्ताव । (५) उद्देश्य; लक्ष्य; विचार; आकाङ्क्षा ।

अब म शारदीय नवरात्रमा दुर्गा पूजाका लागि लेखिएको एक सङ्कल्प उदाहरणका रूपमा लेख्दछु :

हरि ॐ तत्सत् । हरि ॐ तत्सत् । हरि ॐ तत्सत् । ॐ विष्णुः । ॐ विष्णुः । ॐ विष्णुः अद्येह श्रीमद्भगवतो महापुरुषस्य अचिन्त्यापरिमितमायाशक्तिकस्य लीलामेच्छया सृष्टानां शतकोटियोजनविस्तारकाणां अव्यक्तमहदङ्काराऽऽकाशवायुतेजोप्पृथिवी रूपावर-णाऽऽचतुर्दशभुवनात्मकानामनन्तकोटिसङ्ख्याकानां ब्रह्माण्डानामेकतमस्मिन्नेतस्मिन् ब्रह्माण्डे भूर्लोके भूमण्डले जम्बूद्वीपे भारतवर्षे कर्मभूमौ कुमारिकाखण्डे आर्यावर्तान्तर्गते हिमवद्दक्षिणे विन्ध्याचलादुत्तरे नेपालदेशे पाशुपतक्षेत्रे वाग्वती प्रदेशे पशुपतेगुह्यकाल्याश्च पूर्व दिग्भागे वाग्मत्या पूर्वतटे चाँगुनारायणादि पश्चिम दिग्भागे गोकर्णेश्वर सन्निकटे कपिलासव ग्रामे इह पुण्यदेशे वेदोक्तजगत्सृष्टिकारिणो नारायण नाभिकमलोद्भवस्य ब्रह्मणो द्वितीये परार्धे प्रथमे वर्षे प्रथमे मासे प्रथमे पक्षे प्रथमे दिवसे ब्रह्मतिथ्यात्मकेषु मत्स्यपुराणाद्युक्तेषु श्वेतवाराहादिषु त्रिंशति कल्पेषु प्रथमे श्वेतवाराहकल्पे स्वायम्भुवादिषु चतुर्दशसु मन्वन्तरेषु सप्तमे वैवश्वतमन्वन्तरे एकसप्ततौ ससन्ध्यासन्ध्यांशासु चतुर्युगीषु अष्टाविंशतितम्यां चतुर्युग्यां तत्र च सत्यत्रेताद्वापरेषु व्यतीतेषु कलौ युगे प्रवृत्ते तस्य च प्रथमे चरणे एकशतसप्तदशाधिकेषु पञ्चसु सहस्रसु वर्षेषु गतेषु चान्द्राणां प्रभवादीनां षष्टेः संवत्सराणां मध्ये राक्षस नाम्नी संवत्सरे श्रीसूर्ये दक्षिणायणे शरदृतौ सूर्यात् आश्विन मासे चान्द्रात् आश्विन मासे शुक्लपक्षे प्रतिपद्यां तिथौ वालव करणे चित्रा नक्षत्रे चर योगे

गुरुवासरे श्रीसूर्ये कन्याराशौ स्थिते देवगुरौ मकरराशौ स्थिते चन्द्रमसि कन्याराशौ स्थिते शेषेषु ग्रहेषु यथायथं राशिषु स्थितेषु सत्सु एवं ग्रहगणविशेषेण विशिष्टे (शुभे पुण्यकाले) कौडिन्य गोत्रः कौडिन्यवशिष्ठमैत्रावरुण प्रवरो माध्यन्दिनीयवाजसनेयिशुक्लयजुर्वेद-शाखाध्यायी ..... शर्माऽहं सपत्नीकः सकुटुम्बस्य ममेह जन्मनि श्रीदुर्गाप्रीतिद्वारा सर्वापच्छान्तिपूर्वक दीर्घायुर्विपुलधनपुत्रपौत्राद्यनवच्छिन्नसन्ततिवृद्धिस्थिरलक्ष्मीशत्रुपराजय कीर्तिलाभप्रमुखचतुर्विधपुरुषार्थसिद्ध्यर्थमद्यप्रभृतिमहानवमीपर्यन्तं प्रत्यहं द्विकालं श्रीदुर्गापूजनं यथाशक्ति अन्यतमनियम पालनापूर्वकं (अखण्ड) दीपप्रज्वालनं प्रत्यहमेकोत्तर वृद्ध्या प्रत्यहमेकावृत्त्या वा चण्डीसप्तशतीपाठमन्ते यथाशक्ति बलिदानहोमादियावत्कुलाचारप्राप्तं शारदनवरात्रमहोत्सवं करिष्ये । तत्पूर्वाङ्गत्वेन दीपकलशगणेशपूजनं शारदनवरात्रप्रतिपदि विहितं घटस्थापनञ्च करिष्ये ।

पूर्वीय दर्शनमा केही धार्मिक कार्य गर्दा माथि उल्लेखित भएजस्तै जुन सङ्कल्प पढ्ने गरिन्छ । त्यसको एक भागमा सनातनरुपमा चलिआएको कालगणना र भूगोलको अवस्थिति जनाइएको हुन्छ । अब यसको विस्तृत व्याख्या गर्दछु ।

(क) माथिको सङ्कल्पमा भनिएको छ “...ब्रह्मणो द्वितीये परार्धे...”

शास्त्रमा ब्रह्माको आयु सय ब्रह्मवर्ष बताइएको छ । यो आयुलाई “पर” र परको आधालाई “परार्ध” भनिन्छ । ब्रह्माको पहिलो पचास वर्षको आयुलाई “प्रथम परार्ध” वा पहिलो आधा र दोश्रो पचास वर्षको आयुलाई “द्वितीय परार्ध” वा दोश्रो आधा भनिन्छ । अहिले बह्माको दोश्रो पचास वर्षको आयु चलिरहेको छ त्यसैले सङ्कल्पमा “...ब्रह्मणो द्वितीये परार्धे...” भनिएको हो ।

यसै अनुसार गणना गर्दै “...प्रथमे वर्षे प्रथमे मासे प्रथमे पक्षे प्रथमे दिवसे...” पनि भनिन्छ । तर धेरैले आजभोली सङ्कल्प पढ्दा यो भन्न छाडेका छन् ।

(ख) फेरी सङ्कल्पमा भनिन्छ “... वैवस्वतमन्वन्तरे...”

मन्वन्तरको परिचय :-

(१) श्रीकूर्मपुराण, पूर्वविभाग, पञ्चमोऽध्यायः -

तदेकसप्ततिगुणं मनोरन्तरमुच्यते ।
ब्रह्मणो दिवसे विप्रा मनवः स्युश्चतुर्दश ॥
स्वायम्भुवादयः सर्वे ततः सावर्णिकादयः ।
तैरियं पृथिवी सर्वा सप्तद्वीपा सपर्वता ॥
पूर्णं युगसहस्रं वै परिपाल्या नरेश्वरैः ।

यसको (काल) एकहत्तर गुनालाई एक मनुको समय भनिएको छ । हे ब्राह्मण हो ! ब्रह्माको एक दिनमा चौध मनु हुन्छन् । ती सबै स्वायम्भुव आदि र सावर्णिक आदि मनु हुन् । ती मनुबाट सात द्वीप एवं पर्वतमालाको यो पृथिवीलाई पूरा एक हजार युगसम्म पालन गरिन्छ ।

(२) विष्णुस्मृतिः, विंशोऽध्यायः -

चतुर्युगानामेकसप्ततिर्मन्वन्तरम् ।

एकहत्तर चतुगर्युगको एक मन्वन्तर हुन्छ ।

(३) विष्णुपुराण, तृतीयांश, प्रथमोऽध्यायः- स्वायम्भुव, स्वारोचिष, उत्तम, तामस, रैवत, चाक्षुष, श्राद्धदेव (वैवस्वत), सावर्णि, दक्षसावर्णि, ब्रह्मसावर्णि, धर्मसावर्णि, रुद्रपुत्र ( रुद्रसावर्णि), रुचि (रौच्यसावणि, देवसावर्णि) र भौम (भौत्यसावर्णि) : यी चौध मन्वन्तरका नाम हुन् । अहिले वैवस्वत नामक सातौं मन्वन्तर चलिरहेछ ।

मन्वन्तर चौध वटा हुन्छन् । ब्रह्माको एक दिनमा नै यी चौध वटा मन्वन्तर बित्दछन् । चौध मन्वन्तरमध्येको सातौं मन्वन्तरको नाम "वैवश्वत मन्वन्तर" हो र अहिले त्यही मन्वन्तर चलिरहेको छ । यसैकारण अहिलेको समय बुझाउनका लागि सङ्कल्पमा "... वैवस्वतमन्वन्तरे..." भनिएको हो ।

(ग) अनि फेरी "...अष्टाविंशतितम्यां चतुर्युग्यां तत्र च सत्यत्रेताद्वापरेषु व्यतीतेषु कलौ युगे प्रवृत्ते..." भनिन्छ

एक मन्वन्तरमा जम्मा एकहत्तर वटा सत्य, त्रेता, द्वापर र कलि युग (चतुर्युग) हुन्छन् । त्यसमध्ये अहिले चलिरहेको कलियुग अठ्ठाइसौँ कलियुग हो । सङ्कल्पमा "अठ्ठाइसौँ चतुर्युगको सत्य, त्रेता र द्वापर युग बिती लागेको कलियुगमा" भनी बताउन खोजिएको हो ।

(घ) फेरी थपिन्छ "...प्रथमे चरणे..."

कलियुगको पूरा अवधिलाई चार भाग लगाउँदा हुने एक भागलाई चरण भनिन्छ । अहिले कलियुगको चार चरणमध्येको पहिलो चरण चलिरहेछ ।

(ङ) फेरी भन्दछौँ "....कलिर्......गताब्दे..."

यो शब्द समूहले कलि कति वर्ष बित्यो भनेर बुझाउँदछ । अहिले (वि.सं.२०७३ मा) कलियुगको ५११७ औं वर्ष चलिरहेछ । माथिको सङ्कल्पमा यसलाई बुझाउन "एकशतसप्तदशाधिकेषु पञ्चसु सहस्रसु वर्षेषु गतेषु" भनिएको छ ।

## ब्रह्माको एक दिन भनेको कति मानवीय वर्ष ?

एक चतुर्युगमा बाह्र हजार दिव्यवर्ष अर्थात् त्रिचालीस लाख बीस हजार मानवीय वर्ष हुने कुरा माथि नै बताइ सकिएको छ ।

| चतुर्युगको संख्या | दिव्यवर्ष | मानवीय वर्ष |
|---|---|---|
| १ | १२,००० | ४३,२०,००० |
| १००० | १,२०,००,००० | ४,३२,००,००,००० |

ब्रह्माको एक दिनमा चौध मन्वन्तर हुन्छन् । एउटा मनुको अवधि (वा मन्वन्तरको समय) एकहत्तर वटा चतुर्युगभन्दा अलिकति बढी हुन्छ । अर्थात एक मन्वन्तरमा तीस करोड सतसठ्ठी लाख बीस हजार मानवीय वर्ष (आठ लाख बाउन्न हजार दिव्य वर्ष) हुन्छ ।

| चतुर्युगको संख्या | नाम | दिव्यवर्ष | मानवीय वर्ष |
|---|---|---|---|
| १ | चतुर्युग | १२,००० | ४३,२०,००० |
| ७१ | एक मन्वन्तर | ८,५२,००० | ३०,६७,२०,००० |

| संख्या | नाम | दिव्यवर्ष | मानवीय वर्ष |
|---|---|---|---|
| १ | मन्वन्तर | ८,५२,००० | ३०,६७,२०,००० |
| १४ | मन्वन्तर | १,१९,२८,००० | ४,२९,४०,८०,००० |

यसैगरी हरेक मन्वन्तरको बीचमा एक सत्ययुग बराबर (सत्र लाख अठ्ठाइस हजार वर्ष) को थप समय (सन्ध्यांश) हुन्छ भनिएको छ ।

| नाम | दिव्यवर्ष | मानवीय वर्ष |
|---|---|---|
| चौध मन्वन्तरमा हुने समय | १,१९,२८,००० | ४,२९,४०,८०,००० |
| चौध मन्वन्तरमा थप हुने जम्मा पन्ध्र सत्ययुग बराबरको समय | ७२,००० | २,५९,२०,००० |
| जम्मा : | १,२०,००,००० | ४,३२,००,००,००० |

यस्ता एक हजार चतुर्यग (महायुग) को अथवा चौध मन्वन्तरको समय अर्थात चार अरब बत्तीस करोड मानवीय वर्ष बराबर ब्रह्माको एक दिन हुन्छ । यसैलाई नै पृथ्वीको आयु भनिएको छ ।

यसरी हेर्दा कूल चार लाख बत्तीस हजार वर्षको कलियुगको भर्खर त करिब पाँच हजार वर्ष बितेको छ । अहिले नै आत्तिइरहेका छौं । हामी आफ्ना कमजोरी र गल्तीजति सबै लगेर कलिको पोल्टामा हालिरहेका छौं । कलिको मध्य र अन्ततिरका माथिका शास्त्रीय भविष्यवाणी सम्झे, हाम्रो के हालत होला ?

## पृथ्वीको आयु

यस पूर्व बताइ सकियो कि पृथ्वीको आयू चार अरब बत्तीस करोड मानवीय वर्ष बराबर हुन्छ । त्यसोभए पृथ्वीको उत्पत्ति भएको चाहीँ कहिले त ? अब त्यो हिसाब गरेर हेरौं ।

(च) सङ्कल्पमा अगाडि भनिन्छ "..वैवस्वत मन्वन्तरे..."

चौध मन्वन्तरहरु हुन्छन् अहिले चलिरहेको वैवस्वत नामको मन्वन्तर सातौं मन्वन्तर हो । यसको अर्थ अहिलेसम्म छ वटा मन्वन्तर बितिसकेका छन् भनी थाहा पाइयो । छ वटा मन्वन्तर बित्दा कति मानवीय वर्ष बिते त ?

| बितेका छ वटा मन्वन्तरमा बितेका दीव्य एवं मानवीय वर्ष | | |
|---|---|---|
| **नाम** | **दिव्यवर्ष** | **मानवीय वर्ष** |
| एक मन्वन्तरमा बित्ने समय | ८,५२,००० | ३०,६७,२०,००० |
| छ मन्वन्तरमा बितेको समय | ५१,१२,००० | १,८४,०३,२०,००० |

एक मन्वन्तरमा तीस करोड सतसठ्ठी लाख बीस हजार मानवीय वर्ष (आठ लाख बाउन्न हजार दिव्य वर्ष) हुने भएकोले छ वटा मन्वन्तर बित्नु भनेको एक अरब चौरासी करोड तीन लाख बीस हजार मानव वर्ष बित्नु हो ।

यसैगरी हरेक मन्वन्तरको बिचमा एक सत्ययुग (सत्र लाख अठ्ठाइस हजार वर्ष) बराबरको शून्य वा थप समय हुन्छ भनिएको छ । छ मन्वन्तर सकिएर सातौं मन्वन्तर शुरु भइसकेकोले सात पटक शून्य वा थप समय हुने देखियो ।

| बितेका छ वटा मन्वन्तरमा बितेका थप दीव्य एवं मानवीय वर्ष | | |
|---|---|---|
| **नाम** | **दिव्यवर्ष** | **मानवीय वर्ष** |
| एक मन्वन्तरमा थप हुने समय | ४,८०० | १७,२८,००० |
| छ मन्वन्तरमा बितेको समय | ३३,६०० | १,२०,९६,००० |

यसैले सात वटा सत्य युग बराबरको समय अर्थात् एक करोड बीस लाख छयान्नब्बे हजार मानव वर्ष पनि बिति सकेको देखिन आउँदछ ।

| बितेका छ वटा मन्वन्तरमा बितेका जम्मा दीव्य एवं मानवीय वर्ष | | |
|---|---|---|
| **नाम** | **दिव्यवर्ष** | **मानवीय वर्ष** |
| छ मन्वन्तरमा बितेको समय | ५१,१२,००० | १,८४,०३,२०,००० |
| छ मन्वन्तरमा बितेको थप समय | ३३,६०० | १,२०,९६,००० |
| **छ मन्वन्तर बित्दा बितेको जम्मा समय** | **५१,४५,६००** | **१,८५,२४,१६,०००** |

यसरी अहिलेसम्मको हिसाबमा बितेको मन्वन्तर अनुसार पृथ्वीको उत्पत्ति भएको एक अरब पचासी करोड चौबीस लाख सोह्र हजार मानवीय वर्ष पुगेको देखिन आउँदछ । बितिसकेका छ वटा मन्वन्तरको हिसाब निकालियो । अब अहिले चलिरहेको सातौं अर्थात् वैवस्वत मन्वन्तरको पनि कति वर्ष बिते हिसाब गरेर हेरौं ।

(५) संकल्पमा भनिन्छ “..अष्टाविंशतितमे कलियुगे, कलियुगस्य प्रथम चरणे...”

माथि एक मन्वन्तरमा एकहत्तर वटा चतुर्युग हुन्छन् भनी बताइयो । अहिले अठ्ठाइसौं कलियुग चलिररहेको छ भन्नुको तात्पर्य सत्ताइस वटा चतुर्युग पूरै बिति सके भन्नु हो ।

| बितेका सत्ताइस वटा चतुर्युगमा बितेका जम्मा दीव्य एवं मानवीय वर्ष | | |
|---|---|---|
| **नाम र संख्या** | **दिव्यवर्ष** | **मानवीय वर्ष** |
| एक चतुर्युग | १२,००० | ४३,२०,००० |
| सत्ताइस चतुर्युग | ३,२४,००० | ११,६६,४०,००० |

यसरी सत्ताइस वटा चतुर्युग पूरै बित्नु भनेको एघार करोड छैसठ्ठी लाख चालीस हजार मानवीय वर्ष बित्नु हो । अब एकपटक पुनः अहिलेसम्म पृथ्वी उत्पत्ति भएको कति वर्षको हिसाब निस्कियो हेरौं ।

| बितेका मन्वन्तर र चतुर्युगमा बितेका जम्मा दीव्य एवं मानवीय वर्ष | | |
|---|---|---|
| **नाम र संख्या** | **दिव्यवर्ष** | **मानवीय वर्ष** |
| बितेका छ वटा मन्वन्तर | ५१,४५,६०० | १,८५,२४,१६,००० |
| बितेका सत्ताइस वटा चतुर्युग | ३,२४,००० | ११,६६,४०,००० |
| **जम्मा बितेको समय :** | **५४,६९,६००** | **१,९६,९०,५६,०००** |

अब चलिरहेको अठ्ठाइसौं चतुर्युगको  कलियुग चलिरहेछ । यसको अर्थ यो चतुर्युगका  सत्य, त्रेता र द्वापर युग बिति सके भन्ने हो ।

| युगका नाम | अवधि (दिव्यवर्षमा) | अवधि (मानवीय वर्षमा) |
|---|---|---|
| सत्य | ४,८०० | १७,२८,००० |
| त्रेता | ३,६०० | १२,९६,००० |
| द्वापर | २,४०० | ८,६४,००० |
| **जम्मा** | **१०,८००** | **३८, ८८,०००** |

यसरी अहिले चलिरहेको अठ्ठाइसौं चतुर्युगका सत्य, त्रेता र द्वापर युग बित्दा कुल अठतीस लाख अठासी हजार मानवीय वर्ष बिति सकेको देखिन्छ ।

कलिको अहिले प्रथम चरण चलिरहेछ । चालू वर्ष (वि.सं.२०७३) कलिसम्बत् पाँच हजार एकासी हो । कुनै पात्रोमा गलेर्गताब्धा भनिएर लेखिने ५,११७ युधिष्ठिर सम्बत् हो ।

अब पूरा हिसाब हेरौं :

| शिर्षक | अवधि (दिव्यवर्षमा) | अवधि (मानवीय वर्षमा) |
|---|---|---|
| बितेका छ वटा मन्वन्तर | ५१,४५,६०० | १,८५,२४,१६,००० |
| बितेका सत्ताइस वटा चतुर्युग | ३,२४,००० | ११,६६,४०,००० |
| अठ्ठाइसौं चतुर्युगका बितेका तीन युग | १०,८०० | ३८, ८८,००० |
| वर्तमान कलियुगको बितेको समय | | ५,०८१ |
| **जम्मा बितेको समय** | **५४८०४००** | **१,९७,२९,४९,०८१** |

बितेका छ मन्वन्तर, सत्ताइस चतुर्युग, अठ्ठाइसौं चतुर्युगका सत्य, त्रेता र द्वापर युग र अहिलेसम्म बितेको कलियुग समेत गरी जम्मा एक अरब सन्तान्नब्बे करोड उनन्तीस लाख उनन्चास हजार एकासी मानव वर्ष बिती सकेको देखियो । हाम्रो पूर्वीय दर्शन अनुसार यो नै पृथ्वी उत्पत्ति भएको समय हो । कुल पृथ्वीको आयु चौध मन्वन्तरको समय अर्थात चार अरब बत्तीस करोड वर्ष हुने हाम्रो पूर्वीय कालगणनाले देखाउँदछ । किन कि चौध मन्वन्तर बितेपछि ब्रह्माको दिन सकिन्छ र प्रलय हुन्छ ।

अर्को कुरा प्रमाणित नहुँदासम्म विज्ञान भन्दछ पृथ्वीको उत्पत्ति भएको ४.५४ बिलियन (४ अरब ५४ करोड) वर्ष भयो । कुन सही हो मथ्ने जिम्मा भविष्यलाई सुम्पिन चाहैं । तर एउटा कुरा के चाहीं सही हो भने पूर्वीय समय गणनाको सूक्ष्मतम तरिकालाई अध्ययन गर्ने प्रायः सबै पश्चिमेली खगोलशास्त्रीले यसको प्रशंसा गरेका छन् र तथ्यको नजिक (?) रहेको बताएका छन् ।

धर्मकर्ममा प्रयोग गरिने सङ्कल्पमा यसरी नै युगौंअघिदेखि कालगणना हुने गरेको छ । भिँगा टाँस्न र अन्य भाषामा लेखिएका कुरा सबै पत्थरमा लेखिएका सरह हुन्छन् भन्ने मान्यता बाहिर निस्केर अध्ययन गर्ने कुनै प्रकाण्ड विद्वानको जन्म भए यी र यस्ता सबै खाले विवादको टुङ्गो लाग्ने थियो ।